| | | |
|---|---|---|
| पुस्तकको नाम | : | आभास |
| लेखक | : | श्रीशरदकुमार भट्टराई |



| | | |
|---|---|---|
| प्रकाशक | : | राजर्षिजनकस्मृतिकोष<br>विजयचोक, प्रयागमार्ग,<br>बत्तीसपुतली–९, काठमाडौं ।<br>फोन : ४११००५८ |
| प्रकाशन मिति | : | वि.सं. २०७२ साल नववर्ष |
| प्रकाशित सङ्ख्या | : | ३०० प्रति |
| मूल्य | : | रू. २००।– |
| कम्प्युटर सेटिङ्ग | : | श्रीखड्गप्रसाद खनाल |
| मुद्रक | : | एलायन्स प्रिन्टर्स एण्ड<br>मिडिया हाउस प्रा.लि.<br>सरस्वतीनगर, काठमाडौं । |
| ISBN | : | 9789937-2-9954-1 |

# प्रकाशकको भनाइ

यस कोषले आफ्नो स्रोत र साधनले भ्याएसम्म महत्वपूर्ण विषयका ग्रन्थहरू प्रकाशन गर्दै आएको छ। यस २०७२ सालमा पनि श्रीशरदकुमार भट्टराईज्यूले लेख्नुभएका ग्रन्थहरूमध्ये यो आभास कवितासङ्ग्रह पनि अत्यन्त ज्ञानोत्पादक र पठनीय भएको हुनाले यस कोषसले प्रकाशन गरेर जिज्ञासु पाठकहरूका समक्ष प्रस्तुत गरेको छ। यसबाट उहाँहरूलाई ज्ञानवृद्धि गर्न सहयोग नै पुग्नेछ भन्ने यस कोषले ठानेको छ। धन्यवाद।

२०७२ पुत्रदा एकादशी श्रीराजर्षिजनकस्मृतिकोष



# समर्पण

प्रतिविम्ब म मिथ्या हुँ ब्रह्मबिम्ब सनातन।
म हुँ क्षणिक अल्पज्ञ क्षुद्रजीव अकिञ्चन॥
प्रतिरूप उनैको म स्यानो कतकको कण।
आभास हो उनैको यो उनैलाई समर्पण ॥



# ‘आभास’ माथि सम्पादकको टिप्पणी

मानवीय हृदयमा प्रतिपल तरङ्गित भइरहने असीम अनुभूतिहरूलाई परिभाषाबाट परिचित गराउन प्रयास गर्नु जटिल कार्य हो। त्यसमा पनि कविको हृदय, अनुभूति, प्रतिभा र अन्तर्दृष्टिजस्ता अदृश्य वृत्तिहरूको व्याख्या र विश्लेषण अझ दुष्कर हुन्छ। हृदय र चेतनाको सहकार्यबाट निःसृत विशिष्ट वाणीबाट बोध्य विषय सबैका लागि सहज नहुनु स्वाभाविकै पनि हुन्छ। वास्तविक काव्यकला यस्तै शैली, स्वरूप र संरचनामा जीवित हुन्छ। कवितालाई यसै पृष्ठभूमिबाट बुझ्नुपर्ने हुन्छ।

काव्यशास्त्रको लामो परम्परामा कवितालाई पनि परिभाषाबाट चिनाउने प्रयास हुँदै आएको छ। सर्जकको भावोर्मिबाट वाणी पाउने कवितालाई परम्परागत परिभाषाहरूले चिनाउन सकेका छन् वा छैनन् भनेर आत्ममूल्याङ्कन पनि गर्नुपर्ने हुन्छ। कवि के हो र कति हो भन्ने प्रश्नको समाधान नभई गरिने कविताका परिभाषाहरू पूर्ण हुन् वा होइनन् भन्ने पूरक प्रश्न पनि उठिरहन्छ। अतः अहिलेसम्म कविताका विषयमा गरिँदै र पढिँदै आएका परिभाषाहरूलाई व्यक्तिगत विवरणका रूपमा मात्र लिन सकिन्छ, कवितारूपी व्यक्ति नै हुन् भन्न सकिँदैन।

वास्तविक कवि र कवितालाई चिनाउन तथा व्याख्या र विश्लेषण गरेर मूल्याङ्कन गर्न जटिल हुने भएकाले कवि शरदकुमार भट्टराईका कविताको चर्चा गर्नु पनि आफैंमा एउटा चुनौती हो। वेदान्तदर्शनका गूढ र गहन दार्शनिक ग्रन्थहरूका साथै लौकिक साहित्यिक कृतिहरूसमेत गरी तीन दर्जनभन्दा बढी पुस्तक प्रकाशन गरिसक्नुभएका कवि भट्टराईको 'आभास' नवीनतम कवितासङ्ग्रह हो। यस सङ्ग्रहमा प्रतिबिम्बित कविको काव्यशक्तिलाई अनेक आधारबाट विश्लेषण गर्न सकिन्छ तापनि कविताको कथ्य वा भावलाई केन्द्रमा राखेर हेर्दा भक्तिभाव, साक्षीभाव, सम्मानभाव र श्रद्धाभावको अभिव्यञ्जना यी कवितामा भएको पाइन्छ। यिनै भावहरूको तीव्रताका आधारमा यस सङ्ग्रहका कविताहरूलाई चार खण्डमा भिन्नभिन्न शीर्षकमा समेटिएको छ। यस सङ्ग्रहका कविताहरूले कविको आन्तरिक र बाह्य व्यक्तित्वको प्रकाशनमा प्रशस्त भूमिका खेलेका छन्। भगवद्भक्ति, वेदान्तको चिन्तन, मनन, लेखन एवम् प्रचारप्रसार, अध्यात्मको अभ्यास, देशको समकालीन परिवेशको पर्यवलोकन, राष्ट्रनिर्माणका कर्मी कवि र सहकर्मीहरूप्रति शुभकामना एवं सद्भावको अभिव्यक्ति तथा दिवङ्गत महामनाहरूप्रति श्रद्धाञ्जलि समर्पण गर्ने क्रममा लेखिएका यी कविताहरू कविका

जीवनसरणिसँग आबद्ध छन्। कतै चेतनाको तीव्रता र कतै भावनाको प्रबलता पाइने यी कवितामा चिन्तन, दर्शन र शैलीको समन्वय भएको देखिन्छ।

कवि विचार र वेदनाका कवि हुनुहुन्छ। यस सङ्ग्रहका कवितामा देशको तत्कालीन, समकालीन र वर्तमान स्थितिलाई नियाल्दै कविले पथभ्रष्ट राजनीतिक नेतृत्वले यस देशलाई टुक्राटुक्रा पारेर कमजोर बनाउन खोजेको देखेर यस्तो चिन्ता व्यक्त गर्नुभएको छ :

*मेची चिरा छ अनि पश्चिम झन् चिरा छ।*
*यो राष्ट्र धर्मर भएर महा चिरा छ ॥*
*हेरौं जता सकल देख्छु चिरा चिरा छ।*
*धेरै चिरा छ मन यो मुटु झन् चिरा छ॥*
*(कसरी स्वागत गरौं ?)*

पौराणिक कालमा एउटा भस्मासुर थियो भने अहिले नेपालमा भस्मासुरहरूको जमात नै तयार भएको देखेर कविले उनीहरूको चरित्र यसरी चित्रित गर्नुभएको छ :

*अर्काको शिर फोर्नमा कुशल छौ हत्या सधैं गर्दछौ।*
*लुट्छौ राष्ट्रिय सम्पदा लुछिचुँडी खाई भुँडी भर्दछौ॥*
*गोली बारुद साथमा बमहरू बोकी सधैं हिँड्दछौ।*
*आफ्नै दाजु र भाइको क्षय गरी आपस्तमा भिड्दछौ॥*
*(बाटो भुलेकालाई)*

कवि भट्टराईका सबैजसो रचनामा नछुट्ने मुख्य विशेषता वेदान्तदर्शनको प्रभाव, प्रयोग र साधारणीकरण हो। यस सङ्ग्रहको शीर्षक ‘आभास’ नै वेदान्तविषयको पारिभाषिक शब्द हो। अद्वैत वेदान्तमा आभास भनेको मिथ्या हो। परब्रह्मको बिम्ब ईश्वर र त्यसको पनि प्रतिबिम्ब आभास हो। अज्ञानवश डोरीमा सर्पको आभास त्यति बेलासम्ममात्र रहन्छ जति बेलासम्म डोरीको अज्ञान हट्दैन वा प्रकाशले डोरी देखिँदैन। प्रकाशले डोरी देखिइसकेपछि सर्पको भय नाश हुन्छ। त्यसैले डोरीमा सर्पको भ्रमात्मक ज्ञान हुनु मिथ्या वा आभास हो। कविले यस सङ्ग्रहको भूमिकामा मिथ्या संसारका वस्तुहरूको उपाधिलाई प्रतीक बनाएर लेखिएका कविताहरूको काल्पनिक सङ्ग्रह भएकाले यसलाई मिथ्या भनिएको हो भन्ने दार्शनिक तर्क गर्नुभएको छ। कविले सन्न्यस्थ दृष्टिले यसलाई मिथ्या भने पनि गम्भीर भावकले यसबाट अलौकिक आनन्द लिन सक्दछ। वेदान्तीहरूका दृष्टिमा यो जगत् मिथ्या हो भने जगत्को सिर्जना काव्य अर्थात् साहित्य झन् महामिथ्या होला तर यो मिथ्या हो भन्ने बोध काव्यपारखीहरूलाई हुँदै हुँदैन। काव्यमर्मज्ञलाई यस सङ्ग्रहका कविताहरूबाट ‘ब्रह्मानन्दसहोदर’वत् आनन्द भई नै रहन्छ। अलौकिक आनन्दको अजस्र धाराको यस्तो प्रत्यक्ष अनुभूतिलाई

मिथ्या कसरी भन्नु ?

अद्वैत वेदान्तको अध्ययन, चिन्तन, मनन, व्याख्यान र प्रचारप्रसारमा दत्तावधान कविले ब्रह्मचिन्तन नभए मनुष्य जीवन निरर्थक हुने देख्नुभएको छ। कविको स्पष्ट कथन छ :

*पाई मनुष्यको योनि भएन ब्रह्मचिन्तन।*
*भने निरर्थकै हुन्छ हाम्रो अमूल्य जीवन॥*
*(शतायु कामना)*

कवि अशक्तलाई सशक्त र सशक्तलाई सक्रिय बन्न सधैँ प्रेरित गर्नुहुन्छ। यो उहाँको व्यक्तिगत शैली र स्वभाव बनिसकेको छ। कवितामा पनि यही भाव र स्वभाव प्रबल बनेर आएको पाइन्छ। उदाहरणका लागि अस्वस्थ कवि (हाल दिवङ्गत) दैवज्ञराज न्यौपानेलाई उठ्न, चिन्ता नलिन, कविता सुनाउन र फूलझैं मुस्कुराउन यसरी उत्प्रेरित गरिएको छ :

*हामी दिन्छौं भर उठ तिमी हात हाम्रा समाऊ।*
*सारा चिन्ता पर गर तिमी स्वस्थ भै झट्ट आऊ॥*
*तिम्रा राम्रा सरस कविता लौ न आऊ सुनाऊ।*
*आऊ प्यारा तरुण कवि हे! फूलझैं मुस्कुराऊ॥*

जीवनको आवश्यकता र शरीरको अवस्थालाई विचार गरेर तत्त्वविद् त्रिकालदर्शी ऋषिमहर्षिहरूले वर्णाश्रम

व्यवस्था बसाए। कलियुगमा सबैले सन्न्यास नै लिनुपर्छ भनेर आग्रह राख्न सकिँदैन तथापि उमेरसँगै इच्छा, आकाङ्क्षा र आवश्यकतालाई सीमित पार्दै लगिएन र संयमी भइएन भने अन्तिममा शान्ति र सन्तोष हुँदैन। यो सत्य नबुझी उमेर र आकाङ्क्षालाई सन्तुलनमा राख्न नसक्ने व्यक्तिहरूको जीवनचर्या देखेर कविमन उद्वेलित हुन्छ। साधारण मानिसमा यो दुर्बलता देखिए पनि 'पण्डित' 'बुध' जस्ता पर्याय पाएका कविहरूमा समेत यस्तै प्रवृत्ति देखिएकोमा कविलाई आश्चर्य लाग्छ र उनीहरूको रूप र कर्मको वैषम्य उहाँ यसरी देखाउनुहुन्छ :

*झुर्री परे मुखभरी सब केश पाके।*
*आँखा भए मलिन हात र पाउ थाके ॥*
*सम्झी समस्त अधिको रति ग्राम्यधर्म।*
*लेख्तै छ काव्य बिचरो नलिएर शर्म ॥*
*(प्रकीर्ण कवि)*

शास्त्रीय छन्दमा लेखिएका यस सङ्ग्रहका ५४ ओटा कविताहरूमध्ये अन्यत्र प्रकाशित केही कविताको परिष्कार, परिमार्जन, परिवर्तन र परिवर्धन गरी पुनः प्रकाशन गरिएको छ। जुन कविता पहिले भन्दा अहिले अझ बढी सामयिक र सान्दर्भिक भएका छन् र जसले व्यक्तिको चेतना विस्तार, समाजको उन्नयन र राष्ट्रको हितमा तुलनात्मक रूपमा

बढी भूमिका खेलेका छन्, तिनको पुनः प्रकाशन यहाँ पनि गरिएको हो। संस्कृतका हितोपदेश, पञ्चतन्त्र, चाणक्यनीति, कामन्दकीयनीति, रामायण, महाभारत, सुभाषितरत्न-भाण्डागारजस्ता प्रसिद्ध ग्रन्थहरूमा पनि कतिपय राम्रा श्लोकहरू कतै परिवर्तन नगरी र कतै आंशिक परिवर्तन भएर वा पाठान्तरका रूपमा समावेश भएका देखिन्छन्। यस सङ्ग्रहका कुनै कविता वा केही श्लोकको परिष्कारपूर्ण पुनरावृत्तिलाई यसै सन्दर्भबाट औचित्यपूर्ण सिद्ध गर्न सकिन्छ।

भगवद्भक्ति र अद्वैत वेदान्तमा प्रवृत्त भई व्यक्ति, वर्ग, समाज र राष्ट्रमा प्रतिदिन बढ्दै गएको क्षयोन्मुखी गतिविधिको निरीक्षणका साथ सर्जक र सुहृद्हरूप्रति चिरायुष्यको कामना र दिवङ्गत प्रतिभाहरूप्रति श्रद्धाञ्जलि समर्पण गर्दै लेखिएका यस सङ्ग्रहका कविताहरूले कविको परिपक्व जीवनदर्शनको प्रकाशन गरेका छन्। कवितामा दर्शन र दर्शनमा कवित्वको विलयन गराएर भावकलाई कान्तासम्मित उपदेशको शैलीबाट ब्रह्मज्ञान गराएर जीवनलाई मोक्षमार्गतर्फ अभिमुख गराउनु ‘आभास’ कवितासङ्ग्रहको मूल अभीष्ट र उपलब्धि देखिन्छ।

*सहप्राध्यापक ध्रुवप्रसाद भट्टराई*

*बालाचतुर्दशी, २०७१*

# आभास आफ्नै प्रतिभास

मनको शान्त पोखरीमा अचानक विशाल पहाड खस्यो । एकाएक मानसिक तरङ्ग उद्वेलित भए । शान्त हुन सकेको छैन मन । किङ्कर्तव्यविमूढता उसको आधार हो या आधार स्वयं उसको आभास हो । केही खुट्याउन सक्तिन । एउटा देहात्मक पात्र गयो । भनिन्छ आत्मा अजन्मा, नित्य र शाश्वत छ, ऊ कहिल्यै पनि मर्दैन ।

मिथ्यात्मक संसारमा विचरण गर्दा मनुष्यका बुद्धिमाथि पर्ने प्रहार असह्य हुँदोरहेछ । त्यही ताडनाबाट प्रताडित छु म । विदीर्ण छ मेरो मन । म जीवनमा सबभन्दा दुर्दिनताको दुःखद पीडा भोग्दै छु । २०७१ साल असोज ३१ गते शुक्रबारका दिन गोलोकधामको यात्रा गरिन् मेरी धर्मपत्नी कल्पनाले । शास्त्रवेत्ताहरू मिथ्यात्वको व्याख्या गर्दै मलाई सम्झाउँछन् । किन्तु मान्दैमान्दैन मेरो लाटो मन । थाहा छ – 'मरणं प्रकृतिः शरीरिणाम्' तर के गर्ने ? अभेदात्मक बुद्धिको विकास नभएसम्म भेदात्मक बुद्धि प्रबल हुँदोरहेछ । मायालु कल्पनाको गोलोकधामको वास होस् । करजोरी प्रार्थना परब्रह्मसँग ।

श्रद्धेय श्रीशरदकुमार भट्टराईद्वारा रचित कविता, काव्य, खण्डकाव्यहरूका साथै ज्ञान र भक्तिसम्बन्धी कृतिहरूको

जिज्ञासु पाठक थिइन् कल्पना। कविताका साथै धार्मिक र आध्यात्मिक भक्तिसाहित्यमा उनको विशेष चाख थियो। उनी रुचिसाथ पढ्थिन्। 'ज्ञान र भक्ति', 'रासपञ्चाध्यायी' र 'श्रीकृष्णाय वयन्नुमः' जस्ता कृतिका नेपाली पद्यांश त कल्पनालाई प्रायः कण्ठस्थ नै थिए। पाञ्चायन पूजा गर्दा उनी गोपीगीतको संस्कृत मूलसहित अनूदित नेपाली कविता कण्ठस्थ पाठ गर्ने गर्थिन्। वेदान्तमा भने उनको गति थिएन। 'ब्रह्मसाक्षात्कार' जस्ता ग्रन्थहरू पढ्दा भन्थिन् – 'खै, मैले त बुझ्दै बुझिन। यो वेद र वेदान्त त नेपालीमा भए पनि बुझ्नै नसकिने पो हुँदोरहेछ।' उहाँका हृदयस्पर्शी कविता मन पर्थ्यो उनलाई। 'तपाईं के कविता लेख्नुहुन्छ ? कविता त शरद काकाका जस्ता पो लेख्नु पर्छ।' यदाकदा कविता लेखिटोपल्ने मलाई राम्रा कविता लेख्न यसरी प्रेरणा दिन्थिन् कल्पना।

असह्य पीडा र दुःखद परिस्थितिले सन्दर्भ बहक्यायो। म मन्तव्य लेख्न लायक नहुँदानहुँदै पनि मान्यजनको आज्ञा शिरोपर गरी कोर्न बाध्य भएँ – 'आज्ञा गुरूणां ह्यविचारणीया।'

कविवर श्रीशरदकुमार भट्टराईको व्यक्तित्वका विविध पाटा छन्। विशिष्टतायुक्त ती पाटाहरूमध्ये प्रशासकीय व्यक्तित्व, साहित्यिक व्यक्तित्व र आध्यात्मिक वा वैदान्तिक व्यक्तित्वलाई लिन सकिन्छ।

२०२२ सालमा शाखा अधिकृत बनेपछि पदोन्नतिको सोपान चढ्दै धेरै जिल्लामा प्रमुख जिल्ला अधिकारी र गृह, शिक्षा, सामान्य प्रशासनलगायत थुप्रै महत्त्वपूर्ण मन्त्रालयहरूको नेतृत्व सम्हाल्दै सचिव भएर उहाँले कुशल प्रशासकको भूमिका निर्वाह गरिसक्नु भएको छ। स्वच्छता, निष्कलङ्कता र प्रशासनिक चातुर्ययुक्त प्रशासकीय व्यक्तित्वको उल्लेख्य पाटो हो उहाँको।

उहाँ प्रसिद्ध कवि हुनुहुन्छ। बेजोड छ कवित्वशक्ति। मीठा, राम्रा र उत्कृष्ट कविता र काव्यहरूले साहित्यिक व्यक्तित्व चुलिएको छ।

अब रह्यो व्यक्तित्वको अर्को पाटो आध्यात्मिक र वैदान्तिक व्यक्तित्व। दीर्घसेवापश्चात् निवृत्त राष्ट्रसेवकहरूमध्ये कोही धर्मकर्म, पूजापाठतिर लाग्छन्, तीर्थाटन गर्छन् र गर्नुहुन्छ उहाँ पनि। किन्तु बुढेसकालमा संस्कृत व्याकरण – कौमुदी, वेद-उपनिषद्, शाङ्करभाष्य आदि ग्रन्थका ठेलीहरू काखी च्यापेर गुरु खोज्दै लुरुलुरु पढ्न जाने कति होलान् ? नगण्य ! तर उहाँ जानु भयो पढ्न प्रा.डा श्रीदीर्घराज घिमिरेसँग, डा. स्वामी रामानन्द गिरिसँग। अरू धेरै विद्वान्हरूसँग पढ्नु भयो, सङ्गत गर्नुभयो। केही समान उमेर र विचारका साथीसहित दैनिक स्वाध्याय र लेखनमा व्यस्त रहनुभयो, व्याख्याता र उत्कृष्ट

लेखकका रूपमा स्थापित हुनुभयो। स्थापित गराए 'ब्रह्मसाक्षात्कार' देखि 'अजातवाद' सम्मका आजसम्म प्रकाशित उच्चकोटिका ग्रन्थहरूले। सेवानिवृत्तिपछि उहाँले अवलम्बन गर्नुभएको पारमार्थिकमार्ग आध्यात्मिक तथा वैदान्तिक व्यक्तित्वको विशिष्टतम पाटो हो।

वरिष्ठ कवि तथा लेखक श्रीशरदकुमार भट्टराईले आफ्ना कृतिहरू लौकिक र पारलौकिक गरी दुई भागमा विभक्त गर्नुभएको छ। लौकिकमा साहित्यपरक कवितासङ्ग्रह, काव्य, खण्डकाव्य, गीत, भजन, समीक्षासमेत १७ ओटा कृति रहेका छन् भने भक्ति, ज्ञान र अद्वैत वेदान्तसम्बन्धी १७ ओटा ग्रन्थहरू पारलौकिक फाँटमा परेका छन्।

'आभास' मा समाविष्ट ५४ ओटा छन्दोबद्ध कविता आराधना, भावना, समभावना र समवेदना अन्तर्गत चार फाँटमा विभक्त छन्। आराधना फाँटका १५ ओटा कवितामा विगतकालीन कविता लेखनको समीक्षा, सद्बुद्ध्यर्थ दुर्गाआराधना, अखण्ड, अनन्त, आनन्ददायक अद्वैत ब्रह्मतत्त्वको व्याप्ति र श्रीकृष्णको परब्रह्मतासिद्धि, दानको महत्त्व, सनातन वैदिक हिन्दूधर्मका पुनरुद्धारक अद्वैतदर्शनका प्रणेता श्रीशङ्कराचार्यप्रति श्रद्धा, आत्मप्रकाशार्थ भ्रमांशको अवसान, 'अहं ब्रह्मास्मि'को भाव जागृत नभएसम्म मोक्षप्राप्ति नहुने ठोकुवा, आत्माको नित्यता, पुण्यसमाप्तिपछि मर्त्यलोक

फर्कनै पर्ने हुँदा वैशेषिक आदि दर्शनलगायत अन्य भक्तिवादी मार्गहरू भन्दा मुक्तिका लागि ज्ञान नै चाहिन्छ 'ऋते ज्ञानान्न मुक्तिः' भन्ने भावनाको उद्‌बोधन, धर्मको स्थापना र साधु र सज्जनको रक्षार्थ परमतत्त्वस्वरूप श्रीकृष्णावतार, अविद्याको नाशपछि जीवको मुक्ति, सांसारिक निर्भयताका लागि संन्यास आश्रमको आवश्यकता, गङ्गाको पवित्र गाथावर्णन र ज्योतिर्मय शक्तिसौन्दर्यको कामना पढ्न पाइन्छ।

भावनाभित्र परेका २६ ओटा कविताहरूमा वृद्धावस्थाको यथार्थ अनुभूति, कोठे कविगोष्ठीमा कवितापाठको रोचकता, शिर निहुऱ्याएर कालो धनबाट पुरस्कृत हुने धन्धातिर लाग्नुभन्दा सुन्दर सिर्जनातर्फ ध्यान दिन कविवर्गलाई सल्लाह, जराजीर्ण कवितृष्णाको उत्खनन, गजल लेखनप्रति व्यङ्ग्य, भाषा, संस्कृति र संस्कार बदलिएर 'ड्याड्डी-मम्मी' जस्ता परसंस्कृतिबोधक पराई शब्दहरू भित्रिएकोमा चिन्ता, राष्ट्रिय एकता र सद्‌भावका लागि भानुको आवश्यकता, स्वागत गर्न नसकिने आतङ्कग्रस्त नयाँ वर्ष, शिशिरको कहरबाट वसन्तको चिनारी, देशको माटोको चुम्बनभित्रै छ अधिकार र कर्तव्यको उद्‌बोधन, मानसिक स्वच्छताले नै हुन्छ मान्छे अजरामर, शान्तिक्षेत्र युद्धक्षेत्रमा परिणत भएकोमा राष्ट्रको अस्मिता गुम्ने खतरायुक्त वर्तमानप्रति चिन्ता, देश लुट्न

छोडेर नीतिपूर्वक राज्य गर्ने अर्ती आजका नेतालाई, आपसको काटाकाटबाट कसैको पनि जीत नहुने चेतावनी, आफ्नै दाजुभाइका रगतमा होली खेलेर राष्ट्र जर्जर पार्ने भस्मासुरे प्रवृत्ति त्याग्न सल्लाह, तृष्णाको परित्याग र सत्कार्यमा प्रवृत्ति, जन्मभूमिप्रतिको मोह, सन्त्रासैसन्त्रासबीच अस्तित्वको खोजी, वृद्धावस्थालाई मुक्तिको द्वार बनाउन सुझाव तथा राष्ट्रको महिमागान अभिव्यञ्जित छ।

समभावना अन्तर्गतका ६ ओटा कविताहरू कामनै-कामनाका सौगात बन्न पुगेका छन्। यहाँ राष्ट्रकविको चिरायु कामना, अङ्गुरबाबाको सुस्वास्थ्य र ब्रह्मचिन्तनको कामना, कवि दैवज्ञको आरोग्य कामना, आध्यात्मिक व्यक्तित्व केशवशरण र मणिराम पोखरेलको शतायुकामना गरिएको छ।

समवेदना फाँटका ७ ओटा कविता श्रद्धाञ्जलिपरक छन्। राजदरबारमा घटित नृशंसहत्याकाण्डमा भएको राजा वीरेन्द्रको वंशविनाशप्रति साझा श्रद्धाञ्जलि, कोठे कविगोष्ठीका सहयात्री कवि ओमी, कवि भरतराज पन्त, वीरेन्द्रकेशरी, कवि मन्थलीयप्रति श्रद्धासुमन, महाकवि देवकोटाप्रति भावपूर्ण वन्दना र सन्त नेता किसुनजीप्रति श्रद्धाञ्जलि व्यक्त गरिएको छ यहाँ।

समग्रमा भन्नुपर्दा 'आभास' मा ब्रह्म बोलेको छ, देश

बोलेको छ। परब्रह्मतत्त्वको गहन चिन्तन छ। माटोको ममता र राष्ट्रिय गाथा गाइएको छ। कविताहरू आफैँमा समीक्षात्मक तथा समालोचनात्मक छन्। गौरवमय इतिहास रहेको नेपालमा भएको बेथिति, विकृति, विसङ्गति, हत्या, आतङ्क, अराजकता एवं अक्षम नेतृत्वप्रति चर्को आक्रोश पोखिएको अनुभूति हुन्छ। रसदोहनका दृष्टिले जुन कोणबाट जसरी हेरे पनि ब्रह्मतत्त्व र ब्रह्मचिन्तनकै आभास पाइन्छ 'आभास' भित्रका कवितामा।

अन्त्यमा एउटा प्रसङ्ग पनि जोड्ने धृष्टता गरौँ – २०२६ सालमा नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानद्वारा आयोजित राष्ट्रिय कवितामहोत्सवमा सर्वप्रथम भई स्वर्णपदकद्वारा पुरस्कृत कविले २०६८ सालमा 'कविशतक' प्रकाशित गर्नुभएको छ। आदिकवि भानुभक्त आचार्य (१८७१–१९२५) देखि ओमी शर्मा (२०२५–२०६७) सम्म १९६ वर्षबीचका १०० जना कविहरू 'कविशतक'का वर्ण्य विषय बन्न पुगे। कविशतकमा परेका पहिला कवि भानुभक्त आचार्य र अन्तिम एक सयौँ क्रममा परेकी कवयित्री ओमी शर्माका सम्झनामा श्रद्धाञ्जलिस्वरूप लेखिएका कविताहरू पनि आभासमा पर्नु अनौठो संयोग नै मान्नु पर्दछ। चार हरफको एक श्लोक हुने वसन्ततिलका

छन्दको एक एक श्लोकमा कविको नाम, कार्यक्षेत्र, वैयक्तिक स्वभाव, काव्यप्रवृत्ति तथा यथासम्भव पुस्तकहरूको नामसमेत आकर्षक शैलीमा समेट्न सक्नु कवित्व क्षमता र विलक्षण प्रतिभाको द्योतक नै मान्नुपर्छ। एक श्लोकमै पूर्णताको झल्को दिने 'कविशतक' लाई छन्दोबद्ध मुक्तकसङ्ग्रह भन्दा फरक नपर्ला सायद ! धेरै मिठासयुक्त उत्कृष्ट कविता, काव्य खण्डकाव्यहरूद्वारा नेपाली भाषा र साहित्यको श्रीवृद्धिमा महत्त्वपूर्ण योगदान दिइसक्नुभएका कविले स्वयंलाई भने 'कविशतक' मा नसमेटेकोमा चित्त बुझेन मलाई। उहाँकै छन्द र शैली सापट लिएर कोरेँ कविता र सुनाएँ कविलाई –

जो क्रान्तिदूतसरि काव्य अनेक लेख्छन्,<br>
अद्वैतका गहन ग्रन्थ विशेष लेख्छन् ।<br>
देख्छन् सदा परमसत्य र ब्रह्म बोक्छन्,<br>
लेख्छन् सधैं शरद राष्ट्रियभाव पोख्छन् ॥

सर्वं खल्विदं ब्रह्म।

राधेश्याम भट्टराई

२०७१ फागुन २४ गते आइतबार<br>
रावा लामीडाँडा, खोटाङ<br>
सम्प्रति – अनामनगर, काठमाडौं।

*सृजनाको चरम प्रतिभास –*

# आभास

सृजनाका फूलहरू (कवितासङ्ग्रह २०५१) बाट शैशवरूपमा शुरु भएको मेरो काव्ययात्राको चरम वार्द्धक्यरूप आभास (कवितासङ्ग्रह २०७२) मा पुगेर प्रायः परिसमाप्त हुन्छ । यो आभास मेरो अन्तिम कवितासङ्ग्रह हो। अद्वैत वेदान्तले आभासलाई मिथ्या भनेको छ। किनभने परब्रह्मको बिम्बभूत ईश्वर वा साक्षी हुन् र त्यसको प्रतिभास अर्थात् प्रतिबिम्ब आभास हो। उपाधिपक्षपाती आभास उपाधिको अभावमा समाप्त भएर जान्छ। जसरी डोरीमा प्रतिभासित सर्प मिथ्या उपाधिरूपी डोरीको अज्ञान हटेपछि सर्पको अस्तित्व तत्कालै समाप्त भएर जान्छ र शुक्तिमा आभासित चाँदी मिथ्या शुक्तिरूप उपाधि नभएमा प्रतिभासित चाँदी स्वतः मिथ्या हुन्छ। त्यसै गरेर यो आभास पनि मिथ्या संसारका वस्तुहरूको उपाधिलाई प्रतीक वा बिम्ब बनाएर लेखिएका कविताहरूको मिथ्या वा काल्पनिक सङ्ग्रह भएकाले यसलाई मिथ्या भनिएको हो।

यो छन्दोबद्ध कविताहरूको लघुसङ्ग्रह हो। यस सङ्ग्रहलाई विधा, विषय र भावनासमेतको काल्पनिक

आधार बनाएर चार खण्डमा विभाजन गरिएको छ। पहिलो खण्डको नाम आराधना हो। यस खण्डमा भक्ति, वेदान्त र आध्यात्मिक समेत गरेर १५ ओटा कविताहरू समाविष्ट गरिएका छन्। दोस्रो खण्डको नाम भावना राखिएको छ। यस खण्डमा भावनाप्रधान तत्कालीन समयलाई प्रतिनिधित्व गर्ने २८ ओटा कविताहरू परेका छन्। जसमा मुख्य गरेर २०५२ सालदेखि २०६२ सालसम्म नेपालमा देखापरेको नृशंस हत्या, आतङ्क र नरसंहारको बीभत्स र हृदयविदारक दृश्यलाई शब्दावलीमा चित्रण गरेर लेखिएका संवेदनापूर्ण तथा कारुणिक कविताहरू परेका छन्। तेस्रो खण्डको नाम समभावना हो। जसमा विद्वान्, कवि र आफन्तहरूसमेतको सुस्वास्थ्य र शुभेच्छा प्रकट गरेर लेखिएका ६ ओटा कविताहरू परेका छन्। अन्तिम खण्ड समवेदना हो। जुन खण्डमा ब्रह्मलीन भएका व्यक्तिहरूका नाममा समर्पित ७ ओटा कविताहरू समाविष्ट छन्। सबै खण्डमा सङ्कलित कविताहरूको सङ्ख्या ५७ छ।

उपर्युक्त खण्डहरूको नामको पहिलो अक्षर अर्थात् आराधनाबाट 'आ' भावनाबाट 'भा' समभावना र समवेदनाबाट 'स' लिएर यस कवितासङ्ग्रहको नाम आभास राखिएको हो। ग्रन्थको नामकरण गर्ने यो शैली मेरो पहिलो र सायद अन्तिम पनि हो। आभासका बारेमा शुरुमा नै

प्रकाश पारिसकिएको छ।

यस सङ्ग्रहमा वार्णिक छन्दमा लेखिएका छन्दोबद्ध कविताहरू परेका छन्। जसमा मुख्यरूपमा अनुष्टुप्, द्रुतविलम्बित, मन्दाक्रान्ता, पञ्चचामर, प्रमाणिका, शार्दूलविक्रीडितसमेतका छन्दहरू छन्। दुई दशकभन्दा अघिदेखि नै समयसमयमा भक्तिभावना, अनुभूति, शुभकामना, श्रद्धा, समवेदना, राष्ट्रिय भावना र देशको तत्कालीन काहालीलाग्दो अवस्थाबाट स्वतः प्रस्फुटन भएर बाहिर छरिन पुगेका केही भावनाहरूलाई विना कौशल र सीप छन्दमा उनेर मैले थन्क्याएको थिएँ। अद्वैत वेदान्ततर्फको अध्ययन र ग्रन्थलेखनमा समर्पित भएर लागेपछि साहित्यतर्फ अझ खास गरेर लौकिक कविता लेख्नेतिर मेरो प्रवृत्ति स्वतः छुट्न गयो। यस सङ्ग्रहमा प्रकाशित यी कविताहरूलाई मैले मुठो पारेर दराजमा थन्क्याएको थिएँ। ती कविताहरू मध्ये केही त्यसै हराएछन्, केही थोत्रा कागज ठानेर 'खाली सिसी पुराना कागज' भन्दै हिँड्ने कबाडीका हातमा परेछन्। केही कविताहरू कविता लेखिएका पृष्ठमा पछाडिपट्टि खाली काजगमा अद्वैत वेदान्तका निबन्ध र ग्रन्थ लेखेर विसर्जित हुनेमा परेछन्, थाहै भएन। उदाहरणका लागि भावना खण्डको २५ औं सङ्ख्याको कविता 'वसन्तको अन्त'

लाई लिन सकिन्छ। जसका पछाडि 'सर्वं खलु इदं ब्रह्म' भन्ने अद्वैत वेदान्तपरक निबन्ध मैले लेखेंछु। जुन निबन्ध 'औपनिषद पुरुष' नामक ग्रन्थमा प्रकाशित भएको छ।

यसमा सङ्ग्रह गरिएका कविताहरूमध्ये अपरिपक्व अवस्थामा लेखिएका केही कविताहरू परिवर्तित, परिवर्धित, संशोधित, परिमार्जित र सङ्क्षिप्तीकरण हुनुका साथै भिन्न नाम लिएर पनि आएका छन् । सरसरती पढ्दा केही पङ्क्ति वा कविताहरूको पुनरावृत्ति भएजस्तो लाग्न सक्तछ । यस्तो हुनु साहित्य सिद्धान्त अनुसार पुनरुक्ति वा दूषण जस्तो लागे पनि अद्वैत वेदान्तका दृष्टिले भूषण नै मानिन्छ। 'आवृत्तिरसकृदुपदेशात्' ४।१।१।१ भनेर ब्रह्मसूत्रले भनेको छ । वेद, उपनिषद्, महाभारत, गीता, पुराणहरूमा समेत प्रशस्त आवृत्ति भएको पाइन्छ । समीक्षा गर्ने काम सूक्ष्मदर्शी समीक्षकहरूको हो ।

*'गृहिणी सचिवः सखी मिथः प्रियशिष्या ललिते कलाविधौ । करुणाविमुखेन मृत्युना हरता त्वां वद किन्न मे हृतम् ॥' (रघुवंशम् ८।६७)* भनेर आफ्नी पत्नीको विछोडबाट विह्वल भएका राजा अजको जस्तो असह्य वेदनाबाट मर्माहत भइरहेको त्यस्तो अत्यन्त संवेदनापूर्ण अवस्थामा पनि विद्वान्, कवि तथा पूर्वसचिव श्रीराधेश्याम भट्टराईज्यूले अत्यन्त धैर्य र संयम लिएर यस आभासलाई

आद्योपान्त र अक्षरशः पढेर उत्साहप्रद र विद्वत्तापूर्ण मन्तव्य लेखेर यसलाई विशेष प्रतिभासित गरिदिनु भएकोमा उहाँलाई हृदयदेखि म धन्यवाद दिन्छु। यस सङ्ग्रहको प्रकाशन गर्ने प्रेरणा विद्वान् सहप्राध्यापक ध्रुवप्रसाद भट्टराईज्यूबाट पाएपछि प्रकाशन सम्भव भएको हो। उहाँले विद्वत्तापूर्ण र उत्साहप्रद सम्पादकीय टिप्पणीका साथ मन्तव्य, प्रेरणा, उत्साह दिनुका साथै सम्पादनको गुरुतर दायित्वसमेत वहन गरिदिनुभएकोमा उहाँलाई हार्दिक धन्यवाद ज्ञापन गर्दछु। यसको उट्टङ्कण गर्ने खड्गप्रसाद खनाल पनि धन्यवादका पात्र हुनुहुन्छ। धन्यवाद।

विनीत

शरदकुमार भट्टराई

# विषयसूची

| क्रम | शीर्षक | पृष्ठ |
|---|---|---|
| | **आराधना** | |

# १. त्वदीयं वस्तु गोविन्द

न यद्वचश्चित्रपदं हरेर्यशो
जगत्पवित्रं प्रगृणीत कर्हिचित् ।
तद्वायसं तीर्थमुसन्ति मानसा
न यत्र हंसा निरमन्त्युशिक्षया ॥
– *भागवत ५।५।१०*

नाना थरीका पदले समन्वित
भए पनि श्रीहरिनामवर्जित ।
जस्तो सुकै होस् कविता मनोहर
पढ्दैन विद्वान् बुझि कागको घर ॥

मैले लेखेँ विविध कविता सोखले लेख्नु पर्दा ।
सारा फोस्रा ठहरिन गए आज आएर हेर्दा ॥
कैले लेखेँ नख र शिखको तुच्छ शृङ्गार गर्दै ।
लेखेँ थोत्रा विरस कविता छन्दमा शब्द भर्दै ॥
(१)
लेख्नै पर्ने कति कति थिए ती सबै चट्ट छोडी ।
लेख्ने गर्थें सुझबुझविना क्षुद्र वाक्यांश जोडी ॥
कैले नेताकन पनि गरेँ व्यङ्ग्य या भर्त्सनादि ।
आफैँ ठान्थेँ कुशल अति नै जो स्वयं भै प्रमादी ॥
(२)

वाह् वाह् ! गर्थे जब कविहरू भ्यागुतो भैँ म फुल्थेँ।
हावामा नै फुरफुर भई मस्त भै खूब भुल्थेँ ।।
जे जे भेट्थेँ टपटप टिपी व्यर्थका काव्य लेखी।
फ्याकेँ आफ्नू समय सब नै काल देख्तै नदेखी ।।
(३)

ऐले आई अलि अलि बुझेँ त्यो सबै व्यर्थ लाग्यो।
बिस्तारै नै हृदयतलमा चेतना ज्योति जाग्यो ।।
जे जे लेखेँ नियतिवश भै हात जेमा बढाएँ।
पूजा सम्झी अब त सब ती ब्रह्ममा नै चढाएँ ।।
(४)



# २. आराधना

दुर्गे देवि ! तिमीलाई भक्ति राखी निरन्तर ।
गर्दछौँ वन्दना हामी हाम्रो रक्षा सधैँ गर ॥
जयदेवी महादुर्गे ! राष्ट्र जीर्ण भई सक्यो ।
हेर्दाहेर्दै भयो ध्वंस बग्दै दूर गई सक्यो ॥

(१)

जता हेर्‍यो उतै देख्छौँ कोलाहल र खिन्नता ।
छिन्नभिन्न छ सर्वत्र मारामार विभिन्नता ॥
खै अझै चेतना छैन विना चेत भयौँ सब ।
चेतनाकी तिमी देवी चेतना भरिद्यौ अब ॥

(२)

जडता व्याप्त भो सारै संवेदना कता गयो ।
राष्ट्रको स्वार्थ भो टाढा यद्वा अस्त हुँदो भयो ॥
तिमी कल्याणकी मूर्ति तिमी हौ जगदीश्वरी ।
रक्षा गर महादेवि हामीलाई सधैँभरि ॥

(३)

कतै बाढी र पैह्रो छ कतै विध्वंस तर्जन ।
ताडना वञ्चना हत्या आतङ्क र विखण्डन ॥

सधैँ छ मृत्युको त्रास कालको नित्य गर्जन।
के हेर्छ्यौ ? अझ हे देवि ! बचाऊ लौ न तत्क्षण॥
(४)

आयो उमङ्गको बेला दशैँको चाड निर्मल।
तर छौँ आज सम्पूर्ण दुःखी काँतर दुर्बल॥
मारामार र आतङ्क त्यागी एक भई सब।
बस्ने सद्बुद्धि द्यौ आमा ! नेपाली जनमा अब॥
(५)



# ३. रसो वै सः

स्थूलमा पनि सत् नै छ अत्यन्त सूक्ष्ममा पनि ।
अस्तित्व ब्रह्म ले दिन्छ आधार सबको बनी ॥
(१)

घटादि जडमा सत्ता पाएर बन्छ सन् घट ।
अन्यथा हुन्न अस्तित्व चाहे हुन् घट या पट ॥
(२)

सत्‌को सत्ता मिलेमा नै सत्तावान् जड बन्दछ ।
किन्तु सत् चित् दुवै पाई प्राणी चेतन बन्दछ ॥
(३)

आनन्द ब्रह्मको लेशमात्रै रहन्छ जीवमा ।
तारतम्य ठूलो हुन्छ ब्रह्माजीसम्म अन्त्यमा ॥
(४)

आनन्दघन हो ब्रह्म छैन मायिक किञ्चन ।
आनन्दं ब्रह्मणो विद्वान् न बिभेति कुतश्चन ॥
(५)

'रसो वै सः' यसैलाई श्रुतिले पनि भन्दछ ।
'रसं ह्येवायं लब्ध्वा' नै आनन्दी जीव बन्दछ ॥
(६)

ब्रह्म हो रसको राजा आनन्द ब्रह्मको रस।
अरू रस सबै फिक्का ब्रह्ममा छन् सबै रस॥
(७)

रस नै रासलीला हो ब्रह्म हुन् कृष्ण वास्तव।
सत् चित् आनन्द हो ब्रह्म क्रीडा हो उसकै सब॥
(८)

पहिलो ब्रह्मको चित्ता बिम्बरूप भई स्वतः।
साक्षी ईश्वर भैदिन्छ मायाधीश्वर वस्तुतः॥
(९)

साक्षीको पनि आभास यद्वा त्यो प्रतिबिम्ब हो।
मायाधीन छ यो जीव चित्को आभासमात्र हो॥
(१०)

बुद्धिका वृत्तिमा चित्को आभास जब चढ्छ।
असङ्ख्यरूप भै वृत्ति कार्यमा अघि बढ्दछ॥
(११)

रास हो ब्रह्मको खेल गोपिनी वृत्ति हुन् सब।
वृत्ति र ब्रह्मको खेल रासक्रीडा महोत्सव॥
(१२)

बुद्धिका वृत्तिमा ब्रह्म जसै आरूढ बन्दछ।
असङ्ख्यरूपमा ब्रह्म वृत्तिका साथ फुर्दछ॥
(१३)

रासमा ब्रह्म नै गोपी ब्रह्म नै कृष्णरूप हो।

द्रष्टा दृश्य सबै ब्रह्म किन्तु ब्रह्म अरूप हो॥

(१४)

रासक्रीडा हुँदा ब्रह्म सबै नै वस्तु बन्दछ।

कृष्ण नै ब्रह्म हुन् साक्षात् यही नै श्रुति भन्दछ॥

(१५)

रसका पुञ्ज हुन् कृष्ण क्रीडा त्यो वृत्ति मेल हो।

बाहिरी खेल नै हैन त्यो त आन्तर खेल हो॥

(१६)

आत्माराम स्वयं कृष्ण आप्तकाम भईकन।

जसका इन्द्रियै छैनन् छैन भित्र कुनै मन॥

(१७)

कृष्ण चिन्मय हुन् ब्रह्म मायातीत परात्पर।

द्रष्टा दृश्य सबै ब्रह्म अर्को वस्तु कहाँ छ र ?

(१८)

तस्मात् त्यो रासलीला हो ब्रह्मको रसवर्षण।

पुञ्जीभूत भई ब्रह्म जहाँ गर्दछ नर्तन ॥

(१९)

रास हो ब्रह्मको शुद्ध रसरूप प्रदर्शन।

एकाकी ब्रह्म नै गर्छ लीला नाना प्रदर्शन॥

(२०)



# ४. प्रार्थना

शिवको क्षेत्र नेपाल उमाको माइती घर।
        हामी हौँ शिवका भक्त हामी छौँ शिवकै भर॥
अनादि आदि हुन् शम्भु सृष्टि संहारकारक।
        भक्तवत्सल हुन् भोला सम्पूर्ण विश्वधारक॥
(१)

आराधना सधैँ गर्छौं शिवकै पूजनादिक।
        स्थापना शिवको मूर्ति गरेर मात्र वार्णिक॥
परिवार सबैसाथ मिली श्रद्धा लिईकन।
        शिव आराधना गर्छौं नित्यपूजा गरीकन॥
(२)

समाज यो बढेको छ आपसी मेल ली कन।
        गर्छौं आग्रह सारामा धर्ममा नै दिऊँ मन॥
धनको काम हो दान साथमा जान्छ सद् धन।
        आखिरी काम त्यै लाग्छ फुकाऔँ सबले मन॥
(३)

श्रद्धा लिएर अति नै दुइहात जोडी
        गर्छौं सदा स्तवन लोभ र मोह छोडी।
सद्ज्ञान बाँड सबमा दुःख दर्द लेऊ
        हाम्रो समाज दरियोस् शुभ दृष्टि देऊ॥
(४)



# ५. श्रीशङ्कराचार्य

शङ्कराचार्य हुन् साक्षात् शिवका रूप शङ्कर ।
अद्वैत मतका आद्य हुन् आचार्य परात्पर ॥
हिन्दू धर्म र संस्कार जब ह्रास हुँदै गयो ।
त्यसको गर्न उद्धार आविर्भाव हुँदो भयो ॥
(१)

केरला कालडी भन्ने पुण्य भारत वर्षमा ।
नम्बूदरी द्विज श्रेष्ठ शुद्ध ब्राह्मण वंशमा ॥
पिता शिव र माताश्री विशिष्टाका सुपुत्र भै ।
भयो शङ्करको जन्म कुलको अवतंस भै ॥
(२)

वृद्धावस्था हुँदा पाई शिवको वर सुन्दर ।
पुत्रका रूपमा पाए शिवले पुत्र शङ्कर ॥
बढे शङ्कर चाँडै नै शुक्लका चन्द्रमा सरी ।
प्रत्युत्पन्न थियो बुद्धि पढे शास्त्र सरासरी ॥
(३)

आठ वर्ष हुँदा सारा वेदवेदाङ्ग नै पढे ।
बाह्र वर्ष हुँदा सारा शास्त्रादि उनले पढे ॥
सानै बालखकालैमा संन्यास लिई सत्वर ।
पढे गोविन्दका साथ यात्रा थाले निरन्तर ॥
(४)

सोह्र वर्ष हुँदा भाष्य गीता र ब्रह्मसूत्रको ।
लेखे गहन अत्यन्तै अद्वैतपथमा निको ॥
हिन्दूधर्म बचाएर अघि बढ्ने उनै थिए ।
अद्वैतमार्गको रक्षा गर्न शङ्कर जन्मिए ॥
(५)

थिए उद्भट विद्वान् ती वेदान्त केशरी थिए ।
शास्त्रार्थमा हराएर सारा वश गरी लिए ॥
बौद्ध जैन र चार्वाक साङ्ख्य न्याय अनेकन ।
मथी दर्शन सम्पूर्ण गरे खण्डन मण्डन ॥
(६)

सारा तह लगाएर चारै सुर कसीकन ।
चारैतर्फ कसे श्रीले साह्रै सुदृढ आसन ॥
चार पीठ बसाएर मुख्य शिष्यहरूकन ।
पीठाधीश बनाएर थाले अद्वैतशासन ॥
(७)

हिन्दूधर्म बचाएर फैलाई ब्रह्मदर्शन ।
गए बत्तीस वर्षैमा ब्रह्मलीन भईकन ॥
देखिन्छ तर जो छैन मिथ्या हो नामरूपको ।
सर्वत्र छ र देखिन्न त्यो हो सत्य अरूपको ॥
(८)

असत्य छैन देखिन्न बाँझीपुत्र खपुष्प हो ।
यै हो वेदान्तको सार यो बुझ्ने नै सुपुत्र हो ॥
निमित्त र उपादान अभिन्न ब्रह्ममात्र हो ।
अरू केही छँदै छैन देखिने भ्रममात्र हो ॥
(९)

द्रष्टा चेतन हो एक अनेक जड दृश्य हो ।
सबैको भित्र त्यो बस्छ सूत्र आत्मा अदृश्य हो ॥
डोरीमा जसरी सर्प देखिन्छ भ्रममा परी ।
ब्रह्ममा भास्छ यो सारा द्वैत दृश्य त्यसै गरी ॥
(१०)
शुक्तिमा जसरी चाँदी भई चम्किन्छ चम्चम ।
तात्त्विक वस्तु हो शुक्ति मिथ्या रजत हो भ्रम ॥
मिथ्या हो दृश्य संसार द्रष्टा सत्य सधैँभर ।
जीव ब्रह्म र मायाको खेल चल्छ निरन्तर ॥
(११)
विशुद्ध ब्रह्म हो सत्य सारा दृश्य असत्य हो ।
अन्त्यमा जीव हो ब्रह्म, ब्रह्मभिन्न असत्य हो ॥
भेदबुद्धि हटाएर गर्दा अभेद दर्शन ।
जीव नै ब्रह्म भैहाल्छ यै हो अद्वैत दर्शन ॥
(१२)
जीव हो ब्रह्मको बिम्ब अथवा प्रतिबिम्ब हो ।
उपाधि नहुँदा जीव ब्रह्मदेखि अभिन्न हो ॥
उपाधि हुन् यिनी चित्का मायाऽविद्या परस्पर ।
उपाधि यी जसै हट्छन् जीव नै ब्रह्म हो तर ॥
(१३)
अरूलाई तिमी गन्छौ बिर्सिन्छौ आफूलाई त ।
आफैँलाई तिमी हेर दसौँ हौ तिमी नै स्वतः ॥
विकल्प कल्प जे जे छन् ब्रह्ममै सब आश्रित ।
प्रपञ्च ब्रह्ममा भास्छ ब्रह्म आफू निराश्रित ॥
(१४)

आत्माले भोग गर्दैन अभोक्ता हो निरञ्जन ।
भोक्ता हो सब यो भोग्ने बुद्धिले युक्त चेतन ॥
देह षड्विकृति प्राचुर्य कृमिविड्भस्मसंज्ञित ।
विकार छैन आत्मामा छ यो विकारवर्जित ॥
(१५)

अद्वैतवादका मूर्ति जगद्गुरु परात्पर ।
आद्य शङ्करमा लागोस् मेरो भक्ति निरन्तर ॥
तिम्रो दिवसमा आज श्रद्धानत भईकन ।
भावनायुक्त भै गर्छु श्रद्धापुष्प समर्पण ॥
(१६)

अन्त्यमा –

शास्त्रं शारीरमीमांसा देवश्चन्द्रार्धशेखरः ।
आचार्याः शङ्कराचार्याः सन्तु जन्मनि जन्मनि ॥



# ६. ब्रह्मद्रव

म मान्छु यो सबै असत् तथापि मुस्कुराउँछु।
म हुन्न होसमा यहाँ म बोल्छु बर्बराउँछु॥
(१)
म भित्र भित्र हो कता अहं लुकेर बोल्दछ।
विषाक्त भावना सधैँ म भित्र नित्य घोल्दछ॥
(२)
म भित्र कृष्णशर्वरी अझै छ जुर्मुराउँदो।
छ लोभ लालचा घृणा सदैव नै उदाउँदो॥
(३)
म ठान्छु भित्र भित्र नै छ काम सग्बगाउँदो।
छ वासना प्रसुप्तझैँ म भित्र मग्मगाउँदो॥
(४)
म देख्छु यो अगाडिको पछाडिको म देख्तिनँ।
म लेख्छु बाहिरी कुरा स्व भित्रको म लेख्तिनँ॥
(५)
छ आत्मवञ्चना सधैँ म बाँच्छु वञ्चनासित।
म भित्र दूर भैसकेँ म भाग्छु मै स्वयंसित ॥
(६)
छु लर्कँदो तलै तलै उँभो हुने सबै भुलेँ।
म मस्त भै युवा छँदा कता कता कता डुलेँ॥
(७)

छ चाहना असाध्य नै म ऊ कसो गरी हुने ।
स्व आत्मको प्रकाशमा मिलेर झिल्मिलाउने ॥
(८)

विशोक हूँ विमृत्यु हूँ विशुद्ध दिव्य निर्मल ।
उहाँ यहाँ जतातातै म मात्र एक झल्मल ॥
(९)

भवाटवी समान हो अलीक तुच्छ वैभव ।
म मात्र एक सत्य हूँ असत्य हुन् अरू सब ॥
(१०)

म पूर्ण हूँ अखण्ड हूँ म एक हूँ अनेक हुँ ।
म ढुक्ढुकी हुँ धड्कने प्रकाशको प्रकाश हुँ ॥
(११)

उपाधिशून्य हूँ सबै उपाधिको म कारक ।
म नेति नेतिवाच्य हूँ समस्त विश्वधारक ॥
(१२)

म आदि हूँ अनन्त हूँ अनादि हूँ सनातन ।
समष्टि विश्व बस्छ यो म भित्र नै टनाटन ॥
(१३)

भ्रमांश दूर भैदिए म भित्र मै छु पाउने ।
अखण्ड सत्त्वमा मिली अहं स्वयं बिलाउने ॥
(१४)



# ७. अर्को बाटो कुनै छैन

*अन्वीक्षेतात्मनो बन्धं मोक्षञ्च ज्ञाननिष्ठया ।*
*बन्ध इन्द्रियविक्षेपो मोक्ष एषाञ्च संयमः ॥*
*– भागवत ११।१८।२२*

आफैँभित्र दुवै खोजौं ज्ञानले मोक्ष पाइने ।
बन्ध इन्द्रिय विक्षेप मोक्ष संयमले हुने ॥
(१)

सधैँ बाहिर दौडेर आफैंसँग सधैँ लडैं ।
बाल्यावस्था गयो मेरो युवा प्रौढ हुँदै बढैं ॥
(२)

वार्द्धक्य छ जराग्रस्त होस छैन अझैतक ।
फर्कने कहिले भित्र सोचिएन अझैतक ॥
(३)

शृङ्गाररसमा मेरो अझै छ रस दुच्छर ।
*'रसराज रसो वै स'* बुझ्न खोजिन्न खै तर ॥
(४)

सातौं दशक नाघेर लाग्न लागैँ उँधोतिर ।
म खोज्दिनँ अझै लाग्न फर्किएर उँभोतिर ॥
(५)

एषणा धेर बोकेर भ्रम अध्यासका भर ।

परेर म सधैं घुम्छु चारैतिर निरन्तर ॥

(६)

कन्थाहरू सधैं बोकी लेखी गन्थनको कुरो ।

भित्र अन्तरमा पाली अहंको दृढ आँकुरो ॥

(७)

कुवाको ब्याङ्भैं बस्छु विस्तार कसरी हुने ।

अहं घमण्ड बोकेर निस्तार कसरी हुने ॥

(८)

जीवब्रह्मैक्यको ज्ञान कोबाट कसरी लिने ?

त्यसका लागि सत्पात्र म आफैं कसरी हुने ?

(९)

*अहं ब्रह्मास्मि*को भाव कहिले हो पलाउने ?

यसै दुश्चक्रमा फेरि घुमेर कति आउने ?

(१०)

बेला सुन्दर हाम्रो हो कुण्ठा त्यागेर सत्वर ।

*अहं ब्रह्मास्मि*मा पुग्न हामी हौं नित्य तत्पर ॥

(११)

कालले भोलि भन्दैन सम्भेर कालको क्रम ।

आत्मोद्धार हुनेतर्फ गरौं चाँडै परिश्रम ॥

(१२)

ज्ञानका मार्गमा लागौँ म स्वयं ब्रह्म हूँ भनी ।

*यद्‌गत्वा न निवर्तन्ते मृत्युसंसारवर्त्मनि ॥*

(१३)

भगवद्वाक्य सम्झेर लागोस् हाम्रो त्यतै श्रम ।
यद्गत्वा न निवर्तन्ते तद्धाम परमं मम ॥
(१४)

कृष्णसर्प अहङ्कार भित्र पालेर दुच्छर ।
बन्दैन कहिल्यै हाम्रो अन्तःकरण सुन्दर ॥
(१५)

षड्उर्मिव्याप्त हो देह जानी माथि उठीकन ।
तटस्थ बस्नु नै पर्छ जीवले साक्षी भैकन ॥
(१६)

खुला छ ज्ञानको मार्ग यही सार्थक बन्दछ ।
अर्को बाटो कुनै छैन श्रुतिले पनि भन्दछ ॥
*'नान्यः पन्था विद्यतेऽयनाय'*
(१७)



# ८. आत्मा

*अविद्यायामन्तरे वर्तमानाः स्वयं धीराः पण्डितम्मन्यमानाः ।*
*दन्द्रम्यमाणाः परियन्ति मूढाः अन्धेनैव नीयमाना यथान्धाः ॥*
*– कठोपनिषद् १।२।५*

अत्यन्त ठूलो तममा रहेर
आफैँ बडो पण्डित हूँ भनेर ॥
घुम्छन् सधैँ ती शठ भै अनित्य ।
अन्धोसँगै अन्ध समान नित्य ॥
(१)

धनै बडो हो सरि नित्य ठान्ने
वेदान्त विज्ञान कुनै नजान्ने ।
अनित्यलाई जुन नित्य मान्छ
घुमी घुमी त्यो यमलोक जान्छ ॥
(२)

अनित्यले नित्य कदापि हात
लाग्दैन भन्छन् तर युक्ति साथ ।
वेदान्तको ज्ञान गरे त नित्य
अनित्यबाटै पनि मिल्छ नित्य ॥
(३)

आत्मा सधैँ बस्तछ बुद्धिभित्र
गैह्रो गुफाभित्र लुकी विचित्र।
दुर्दर्श हो तै पनि युक्ति साथ
गर्‍यौँ भने चिन्तन लाग्छ हात॥
(४)

सानो छ आत्मा अति सूक्ष्म सार
ब्रह्माण्डभन्दा छ ठुलो अपार।
यो बुद्धिको भित्र गएर बस्छ
दुर्दर्श हो प्राज्ञ अवश्य देख्छ॥
(५)

अनित्य संसार अनित्य देह
अनित्य दारा सुत वित्त गेह।
अनित्य चारैतिर छन् अनेक।
अनित्यका भित्र छ नित्य एक॥
(६)

न वेदले मिल्दछ गूढ आत्मा
न बुद्धिले मिल्छ अचिन्त्य आत्मा।
पढेर धेरै न त मिल्छ आत्मा
आत्मैकृपाबाट छ लभ्य आत्मा॥
(७)



# ९. मुक्ति

अशेष र विशेषादि गुणका ध्वंसले पनि ।
खुल्दैन मुक्तिको ढोका कणभुक्‌ले भने पनि ॥
(१)

दीपनिर्वाण होस् यद्‌वा क्लेश नाश भए पनि ।
अभाव मुक्ति नै हुन्न जति तर्क दिए पनि ॥
(२)

असत्‌बाट कहीँ कैल्यै जन्मिन्न सत्य वस्तुतः ।
शून्यवादी असद्‌वादी ती हुन् खोक्रा अवस्तुतः ॥
(३)

ठाउँ हेरेर जो बोल्छन् स्याद्‌वादी जैन ती पनि ।
आफैँ नै स्पष्ट ती छैनन् घुमेका छन् भ्रमी बनी ॥
(४)

मीमांसकहरू ज्यादा स्वर्गकामी बनीकन ।
स्वाहा आफ्‌नू सबै गर्छन् ध्वाँसे पारेर नै मन ॥
(५)

पुण्य पाप समानै हो अस्थायी त्यसको फल ।
आखिरी फर्कनै पर्छ पुण्य भोग गरी तल ॥
(६)

भक्तिको फल हो मुक्ति तर भक्तहरू पनि ।
मुक्तिलाई गरी गाली घुम्दछन् नित्य फन्फनी ॥
(७)

जति छन् पन्थ या वाद बुझ्न अत्यन्त दुष्कर ।
ज्ञानको मार्ग मात्रै हो सजिलो अति सुन्दर ॥
(८)

मुक्ति हुन्न विनाज्ञान ज्ञानकारण बन्दछ ।
*"ऋते ज्ञानान्न मुक्तिः"* नै वेदले पनि भन्दछ ॥
(९)



# १०. सद्योमुक्ति

*पराञ्चि खानि व्यतृणत्स्वयम्भू–*
*स्तस्मात्पराङ्पश्यति नान्तरात्मन् ।*
*कश्चिद्धीरः प्रत्यगात्मानमैक्ष–*
*दावृत्तचक्षुरमृतत्वमिच्छन् ॥*
*(कठोपनिषद् २।१।१)*

ब्रह्मा रिसाई नयनादिलाई
दिए जसै बाहिर नै घुमाई ।
मान्छे सधैँ बाहिर हेर्छ खालि
निष्पट्ट कालो तम भित्र पाली ॥
(१)

ज्ञानी कुनै खूब भएर धीर
विशुद्ध आत्मातिर फर्किएर ।
हेर्ला जसै ऊ पनि बन्छ सोही
बाहेक ऊ को छ र ? अन्य कोही ॥
(२)

फर्केर आफैँतिर चक्षु खोली
*ब्रह्मास्मि* भन्ने शुभ मन्त्र बोली ।
जाला कुनै मानिस देह छोडी
ऊ ब्रह्म बन्ला उससाथ जोडी ॥
(३)

यै जन्ममा ज्ञान भयो भने नै
तर्ने छ मान्छे र हुनेछ जाति ।
तरेन ता त्यो भवसिन्धु भित्रै
घुम्ने छ बन्दै अति आत्मघाती ॥
(४)

देखिन्न आत्मा छ अदृश्य खास
त्यो बुद्धिमा गर्दछ नित्य वास ।
त्यो हो सधैँ इन्द्रियले अगम्य
र हुन्छ सम्यक् मनबाट गम्य ॥
(५)

*ब्रह्मास्मि*को भाव लिएर भित्र
जो बस्तछन् स्वान्त गरी पवित्र ।
ती ब्रह्म हुन् ब्रह्म भएर बस्छन्
यही कुरा वेदपुराण भन्छन् ॥
(६)

*ब्रह्मास्मि*को भाव लिएर गाढा
जो बस्छ मिथ्या भवबाट टाढा ।
त्यो मुक्त हो आखिर मुक्त बन्छ
यही कुरा शाश्वत वेद भन्छ ॥
(७)

*ब्रह्मास्मि*को भाव लिएर खास
जो बस्छ सारासँग भै उदास ।
प्राणादि हुन्नन् उसका वियुक्त
मिल्छन् यहीँ बन्दछ सद्यमुक्त ॥
(८)



# ११. श्रीकृष्ण

कृष्ण हुन् विश्वका बीज कृष्ण हुन् जगदीश्वर ।
पूर्णांश भगवान् कृष्ण साक्षात् हुन् परमेश्वर ॥
गोपीका कृष्ण हुन् आत्मा, राधाका हृदयेश्वर ।
सर्वसाक्षी जगत्स्रष्टा नियन्ता हुन् परात्पर ॥
(१)

विश्वमा जब फैलन्छ अत्याचार उपद्रव ।
नासिन्छ धर्म संस्कार बाँच्न हुन्छ असम्भव ॥
निसासिन्छन् जहाँ साधु असाधु बद्धदछन् जब ।
गर्न सद्धर्मको रक्षा आउँछन् कृष्णजी तब ॥
(२)

कृष्ण हुन् सबका साथी कृष्ण हुन् सबका मन ।
मातापिता सबै कृष्ण कृष्ण हुन् सबका धन ॥
परब्रह्म निराकार साकार मूर्तिमान् अनि ।
कर्ता कारण हुन् कृष्ण अकर्ता पनि हुन् उनी ॥
(३)

द्वन्द्वयुद्ध सधैँ चल्छ अन्तःकरण जल्दछ ।
महाभारतको युद्ध सबैमा नित्य चल्दछ ॥

धृतराष्ट्र यहाँ फेरि अन्धो भएर आउँछ।
बोकी दुर्जय आकाङ्क्षा दुर्योधन उदाउँछ॥

(४)

युग अन्धो बनेको छ कंसको आज बिग्बिगी।
बढेको छ सबैतर्फ लामा नङ्ग्राहरू झिकी॥
दुष्टले आज सर्वत्र गर्दैछ सब भक्षण।
हे कृष्ण ! अब लौ आऊ बचाऊ गर रक्षण॥

(५)

जहिले जुन वेलामा देखिन्छ नग्न नर्तन।
आउँछन् भगवान् कृष्ण युगधर्म बचाउन॥
कर्मका उपदेष्टा हुन् श्रीकृष्ण विश्वभावन।
ब्रह्म हुन् भगवान् कृष्ण हामी हौँ उनकै कण॥



# १२. निर्मुक्तबन्धन

पहिले म कुरा गर्थें संसारतिर धाउने।  
अहिले म कुरा गर्छु कसरी यो छुटाउने॥  
(१)

पैले संसार यो लाग्थ्यो चकाचौंध रिमीझिमी।  
यसैमा अहिले देख्छु अलीक भ्रमझैं कमी॥  
(२)

चाहन्थें पहिले घुम्न संसारैभरि फन्फनी।  
अहिले घुम्न चाहन्छु आफैंभित्र स्वयं बनी॥  
(३)

धनको चाहना हुन्थ्यो पहिले जो भ्रमी बनी।  
अहिले त्यो सबै लाग्छ मिथ्यै मिथ्या जता पनि॥  
(४)

मिथ्या र गौण आत्मामा आसक्त्यादि रहेतक।  
बाँकी रहन्छ अध्यास कुसंस्कार रहेतक ॥  
(५)

जसमा त्यो छँदैछैन त्यसैमा छ भनीकन।  
भन्नु अध्यास हो भन्छन् विद्वान् ज्ञानी गुणी जन॥  
(६)

डोरीमा सर्पको बुद्धि मिथ्या अध्यास हो जुन।  
सर्पको भ्रम तोडेर डोरी नै देख्छ सज्जन ॥  
(७)

त्यस्तै नै ब्रह्ममा मिथ्या संसार जुन भास्तछ।
ब्रह्मको ज्ञानले सारा मिथ्या संसार मास्तछ॥
(८)

त्रिकालाबाध्य सद्ब्रह्म असत् हो सर्वदा असत्।
व्यावहारिक सत् मिथ्या ब्रह्मज्ञान भए असत्॥
(९)

पारमार्थिक सद्ब्रह्म सधैँ नै छ झलामल।
त्यसको ज्ञानले मिल्छ मुक्तिझैँ मुक्तिको फल॥
(१०)

कूटस्थ प्रत्यगात्मा हो साक्षी चैतन्य ईश्वर।
मायाधीश उही नै हो अविद्यादेखि जो पर॥
(११)

बुद्धिमा त्यसकै छाया परेमा जीव बन्दछ।
कर्ता भोक्ता त्यही नै हो श्रुतिले यही भन्दछ॥
(१२)

आफ्ना नै कर्मले गर्दा जीव फन्फन घुम्दछ।
अविद्या कर्म नासेमा ऊ साक्षात् ब्रह्म बन्दछ॥
(१३)

अविद्या कामकर्मादि यी हुन् संसृतिबन्धन।
ज्ञानद्वारा डढाएमा जीव निर्मुक्तबन्धन ॥
(१४)



# १३. चतुर्थ आश्रम

प्रबलानिलवेगवेल्लितध्वजचीनांशुककोटिचञ्चले ।
अपि मूढमतिः कलेवरे कुरुते कः स्थिरबुद्धिमम्बिके ॥
अति दुर्जय वायुवेगले कपडाको ध्वज काम्छ थर्थर ।
ध्वज नै सरि देह अम्बिके ! क्षणमै जान्छ भएर जर्जर ॥

(१)

कतिनाम सुता नलालिताः कति वा नेह वधूरभुञ्जिहि ।
क्व नु ते क्व च ताः क्व वा वयं भवसङ्गः खलु पान्थसङ्गमः ॥
कति पुत्र पियार गर्नुभो कति वा पुत्रवधू पसे घर ।
अब अम्ब ! कहाँ गए तिनी सब हुन् पान्थसमान अस्थिर ॥

(२)

भ्रमतां भववर्त्मनि भ्रमात् नहि किञ्चित् सुखमम्ब लक्ष्यये ।
तदवाप्यचतुर्थमाश्रमं प्रयतिष्ये भवबन्धमुक्तये ॥
भ्रमले भवमा बनी भ्रमी घुमिरेछौं भयले ससम्भ्रम ।
सुख छैन यहाँ कहीँ कतै सब यो हो भुमरी भ्रमैभ्रम ।
भवको भय हर्न अम्बिके ! दिनुहोस् जान चतुर्थ आश्रम ॥

(३)

*(मूल लेखक शङ्कराचार्य)*



# १४. भागीरथी

गङ्गे ! आयौ भनन कसरी शम्भुका माथ माथि ।
छोड्यौ सारा जति पनि थिए स्वर्गका दिव्य साथी ॥
गङ्गे ! गर्दै घुनुनु घुनुनू वेगले नित्य झर्छ्यौ ।
गङ्गे ! तिम्रो पतिततरणी नीर सर्वत्र छर्छ्यौ ॥
(१)

अग्ला अग्ला शिखर तलमा बज्रँदै नाच गर्दै ।
मोती जस्ता जलकणहरू व्योममा नित्य छर्दै ॥
जो जो झर्छन् वरपर नदी ती सबै नै सँगाली ।
गङ्गे ! बढ्छ्यौ अघिअघि तिमी धैर्यलाई अँगाली ॥
(२)

गङ्गे ! आयौ हिमशिखरको भित्रको गर्भ फोरी ।
स्वाँ स्वाँ गर्दै तलतल झर्‍यौ भूमिमा मार्ग कोरी ॥
तान्दै लान्थे नृपवर जता मार्ग सोही बनायौ ।
पुर्खा तार्‍यौ सकल उनका नाम राम्रो चलायौ ॥
(३)

गङ्गे ! ऐले पनि घुमिघुमी दूर पर्देश जान्छ्यौ ।
पापी जो छन् कलुष अति नै पार तारेर लान्छ्यौ ॥
घुम्दाघुम्दै म पनि जननी तिर्सनामै हराएँ ।
गङ्गे ! आएँ समय सकियो बल्ल पो होस पाएँ ॥
(४)

*गङ्गोत्तरी २०६१ असार २ गते*

# १५. ज्योतिर्गमय

पूषन् ! तिम्रो उदयपथमा दृष्टि दी एकनास ।
हामी माग्छौँ गहन तम यो नाश गर्ने प्रकाश ।।
तिम्रा लामा वरद कर ती लौन चाँडो निकाल ।
कालो मैलो अतिशय घना कालिमा झट्ट फाल ।।
(१)

चिर्दै आऊ सघन घन यो झुल्क हे दिव्यरश्मि !
फैलाऊ हे ! झलमल हुने दिव्य शोभा तिलस्मी ।।
ऐले हामी जडमति भयौँ दृष्टिमा दोष आयो ।
हाम्रो सारा सुझबुझ गयो चेतना नै हरायो ।।
(२)

बढ्दै आयो गहन कुहिरो ढाकिए नेत्र ऐले ।
देख्नै छाड्यौँ अलि अलि गरी दृश्य सारा क्रमैले ।।
जाने बाटो सब भुलिसक्यौँ दिव्य आभा फिँजाऊ ।
चाँडै आऊ गगनपथमा दिव्य चालेर पाउ ।।
(३)

आयौँ हामी अघि अघि बढी दीप्तिमान् भै अजस्र ।
आए हाम्रा पछि पछि अरू दीप्तिकामी सहस्र ।।
ऐले हामी तल तल झर्‍यौँ लाग्छ सारै नराम्रो ।
अज्ञानी छौँ अबुझ पनि छौँ चेतना छैन हाम्रो ।।
(४)

विस्तारै नै पर पर भयौँ ज्योतिदेखिन् डराई ।
हामी जान्छौँ गहन तमकाभित्र यद्वा हराई ।।
हामीलाई अब गर जनी बुद्धि देऊ विवेक ।
जस्तै टाढा बस तर तिमी आस तिम्रै छ एक ।।
(५)
देख्छौँ चारैतिर छ धमिलो घुप्प निस्पट्ट कालो ।
के हेर्दैछौ ? अझ पर बसी फ्याँक सङ्कीर्ण जालो ।।
फैलाऊ हे ! झलमल हुने शक्ति सौन्दर्य आलो ।
तिम्रो आयो घनतिमिरमा चम्किने आज पालो ।।
(६)



# १६. अनुभूति

पढ्दा पढ्दै अघि वय गयो होस केही नपाई ।
कुद्दा कुद्दै समय सकियो स्वार्थमा नै रमाई ॥
छोराछोरी गृह र गृहिणी बन्धु भन्दै हराई ।
अन्धो जस्तै समसम हिड्यौँ मार्ग यद्वा बिराई ॥
(१)
हाम्रो सारा समय सकियो स्वार्थमा मुस्कुराई ।
आफ्ना भन्थ्यौँ स्वजन जति छन् ती रहेछन् पराई ॥
बिर्सी सारा विगत अब ता स्वच्छ भै जुर्मुराई ।
जागौँ लागौँ सुकृत पथमा मोह हुस्सू भगाई ॥
(२)
के हेर्दैछौँ अझ पनि हरे ! अर्थमा लुब्ध बन्दै ।
यद्वा बाँच्छौँ सुझबुझ विना कालको चाल गन्दै ॥
छोडी सारा लटपट उठौँ वृद्ध सम्पूर्ण हामी ।
लागौँ चाँडै शुभद पथमा सत्य सद्धर्म थामी ॥
(३)
वृद्धावस्था सुझबुझ भए स्वर्गको द्वार यो हो ।
वृद्धावस्था सुझबुझविना नर्कको द्वार यो हो ॥
वृद्धावस्था अनुपम छ यो ज्ञानको पुञ्ज यो हो ।
वृद्धावस्था सुखद पनि हो भक्तिको कुञ्ज यो हो ॥
(४)

बूढा हामी सकल जति छौँ छौँ सबै भाग्यमानी ।
बढ्दै जाऔँ शुभद पथमा कत्ति अल्छी नमानी ॥
जागौँ साँच्चै अब त सब हे ! मोक्षको द्वार खोली ।
हामी लागौँ सुखद पथमा रामको नाम बोली ॥
(५)

फ्याँकी सारा भ्रम कुहक यी ब्रह्ममा वृत्ति जोडी ।
उठ्यौँ चाँडै म अनि ममको तुच्छ जञ्जाल तोडी ॥
कल्ले रोक्ने सरल मनको ज्वार जाज्वल्य वंश ।
कल्ले छेक्ने दहर तहको शुद्ध चैतन्य अंश ॥
(६)

यो धर्तीमा नर जुनि लिई जन्मने भाग्य पायौँ ।
भाग्यैद्वारा सुकृतपथको पान्थ भै आज आयौँ ॥
हिँड्दा हिँड्दै समयतिर वा ध्यान हाम्रो गएन ।
यद्वा हाम्रो यस विषयमा ज्ञान राम्रो भएन ॥
(७)

धेरै नै छन् सम विषमका मार्ग नाना अनेक ।
यौटै मात्रै अभय पथ हो ब्रह्मको ज्ञान एक ॥
तस्मात् चाँडै सुझबुझ लिई ज्ञानका तर्फ लागौँ ।
सुस्ती छोडी अब त सब हे ! जुर्मुराएर जागौँ ॥
(८)

*वृद्धवर्ष २०६९*



# १७. कविगोष्ठी

पैल्यैदेखिन् म पनि कविका साथमा को. क. धाएँ ।
मैले केही बुझिनँ शुरुमा मार्ग यद्वा बिराएँ ॥
जाँदा जाँदै अलमल परी बीचमा नै हराएँ ।
आफू होचो सब विषयमा लाज मानी डराएँ ॥
(१)

बिस्तारै नै घुलमिल भयौं साथसाथै रमायौं ।
लेख्यौं जस्ता गजल कविता मस्त बन्दै सुनायौं ॥
धेरै लामो समयतक नै को. क. को कोष्ठ धायौं ।
ऐले साँच्चै भन त कविजी के गुमायौं र पायौं ?
(२)

पायौं साथी सब सहृदयी काव्य लेख्यौं सुनायौं ।
हेर्दाहेर्दै अलिअलि गरी मित्र केही गुमायौं ॥
केही साथी अघि गइसके जान केही तयार ।
लठ्ठी ताकी नियति छ खडा हौं सबै होशियार ॥
(३)

कैले लेख्छौं युवकयुवती बीचको प्रेमवार्ता ।
कैले लेख्छौं कलुषित कुनै कामको ग्राम्यवार्ता ॥
हामी लेख्छौं मम र ममता भित्र राखेर सारा ।
त्यस्मै पोख्छौं दमित मनको क्षुब्ध उद्दीप्त धारा ॥
(४)

कोठे गोष्ठी कविमिलनको रम्य यौटा थलो हो।
यद्वा गोष्ठी घुमफिर गरी आउने यो खलो हो॥
यद्वा गोष्ठी विविध कविता पस्किने यो थलो हो।
यद्वा साथीसँग पनि कतै झस्किने यो थलो हो॥
(५)

कोठे गोष्ठी बह हृदयको बर्सने यो थलो हो।
यद्वा गोष्ठी विरत अति भै तर्सने यो थलो हो॥
यद्वा गोष्ठी सब कवि मिली जिस्किने यो थलो हो।
यद्वा साँच्चै प्रखर कवि भै निस्किने यो थलो हो॥
(६)

गाँठे भन्दै हडबड गरी देखिने यो थलो हो।
यद्वा गोष्ठी जिनतिन गरी लेखिने यो थलो हो॥
यद्वा सिक्ने अनि कवि हुने तालिमेको थलो हो।
यद्वा मात्रै नियमित हुने तारिखेको थलो हो॥
(७)

आफ्ना आफ्ना मिलजुल गरी चम्किने यो थलो हो।
यद्वा साथीसँग पनि कतै बम्किने यो थलो हो॥
साक्षी बन्दै गुमसुम भई ढस्स बस्ने थलो हो।
यद्वा गोष्ठी रसिक जनले भाव पोख्ने थलो हो॥
(८)

कोठे गोष्ठी स्वजन सबका पुष्टिका लागि हो कि ?
यद्वा गोष्ठी अहममका तुष्टिका लागि हो कि ?
कोठे गोष्ठी मन बहलिने गानका लागि हो कि ?
यद्वा गोष्ठी सुकृत जनका मानका लागि हो कि ?
(९)

कोठे गोष्ठी अबुझ जनका शानका लागि हो कि ?
यद्वा गोष्ठी अकृत जनका ज्ञानका लागि हो कि ?
यद्वा गोष्ठी नव समयका क्रान्तिका लागि हो कि ?
यद्वा गोष्ठी जलन मनको शान्तिका लागि हो कि ?

(१०)

कोठे गोष्ठी गफसफ गरी बात मार्ने थलो हो ?
यद्वा आई जिनतिन यसै काल टार्ने थलो हो ?
यद्वा गोष्ठी सजधज भई आउने यो थलो हो ?
यद्वा साँच्चै रसिक जनले गाउने यो थलो हो ?

(११)

लेख्तालेख्तै समय सकियो लेखमा सार छैन ।
बोल्दाबोल्दै थकित सब छौं वाक्यमा प्यार छैन ॥
सम्झी सम्झी भन त कविजी के भयो काम खास ।
सारा फुस्सा अब त कविजी हुन्छु सारै उदास ॥

(१२)

दौड्यौं टाढा अब त कविजी फर्कनु पर्छ भित्र ।
हाम्रो यौटा दहर तलमा मौन भै बस्छ मित्र ॥
हामी छुट्छौं जब सब जना साथमा हुन्छ सोही ।
मर्दा पर्दा सब परपरै साथमा हुन्न कोही ॥

(१३)

हामी हौँला कतिपय यहाँ अस्तिको भावभित्र ।
यद्वा हौँला कतिपय कठै नास्तिको भावभित्र ॥
हौँला हामी विविध रङ्का फूल जस्तै विचित्र ।
जे हौँ हामी सकल तर हौँ ब्रह्मका नै विवर्त ॥

(१४)

कोठे गोष्ठी सरस छ सधैं टिप्पणी जो हुनाले ।
कोठे गोष्ठी मधुर छ सधैं भोज मीठो हुनाले ॥
कोठे गोष्ठी कटु पनि हुने चित्त सानो हुनाले ।
जे होस् गोष्ठी निरवधि चलोस् सिर्जना यो हुनाले ॥
(१५)

कोठे गोष्ठी सरस छ सधैं टिप्पणी जो हुनाले ।
तर्सन्छौं वा चसचस कतै भित्र घोच्ने हुनाले ॥
कोठे गोष्ठी मधुर छ सधैं भोज मीठो हुनाले ।
तर्सन्छौं वा विविध रङ्का रोग भित्रै हुनाले ॥
(१६)

कोठे गोष्ठी प्रियतर सधैं स्वच्छ ताजा हुनाले ।
खोर्सानीभैं कटु पनि हुने तीक्ष्ण जिब्रो हुनाले ॥
कोठे गोष्ठी विविध सरि यो दृष्टि आफ्नो हुनाले ।
कोठे गोष्ठी पछितक चलोस् सृष्टि आफ्नो हुनाले ॥
(१७)



# १८. कविविडम्बना

संस्था खुले विविध काम र नामसाथ।
छन् पङ्क्तिमा कवि खडा निहुराइ माथ॥
सोझा सुधा कविहरू नबुझेर अर्थ।
पाएर बक्सिस सधैँ अति छन् कृतार्थ॥
(१)

पालो गरी घुमिघुमी पद अंश लाई।
छन् गौरवान्वित यहाँ सब भाग पाई॥
जस्तोसुकै पुरुष होस् अब छैन भेद।
कालो थियो धन जहाँ सब भो सफेद॥
(२)

वाचाल धूर्त जनका दल आज जागे।
साहित्यकातिर उनै अघि बढ्न लागे॥
व्यापार भो सकल लेखन सिद्धिसाध्य।
देखिन्छ सम्भ्रम यहाँ कविमा असाध्य॥
(३)

त्यागी अहं दमित भै सब काम गर्छन्।
थापेर हात बबुरा किन ? पेट भर्छन्॥
देखिन्छ दिग्भ्रमित झैँ कविको समाज।
यद्वा धनीसँग झुक्यो कि ! कवित्व आज॥
(४)

सम्पन्न संस्कृत सुसभ्य गरीब दीन।
ठूला प्रसिद्ध कवि हुन् अथवा नवीन॥
छन् द्रव्यका पछि अतीव लिएर आस।
छन् पङ्क्तिबद्ध बिचरा अति छन् हताश॥
(५)
सङ्गीतकार कुचिकार र पत्रकार।
शिल्पी प्रशिक्षक निरीक्षक चित्रकार ॥
छानी चरित्र बलका कमजोरलाई।
गर्छन् पुरस्कृत सधैँ पछुवा बनाई ॥
(६)
आफैँ छ मालिक परीक्षक हुन्छ आफैँ।
दाता स्वयं अनि निरीक्षक हुन्छ आफैँ॥
आफैँ सभापति पुरस्कृत गर्छ आफैँ।
आफैँ स्वघोषित भई सब गर्छ आफैँ॥
(७)
छन् धेर काव्य कविता र विधा अनेक।
जान्दैन ती सकलमा पनि मात्र एक॥
राखी गुठी धन दिँदोछ बनी विधाता।
त्यै व्यक्ति बन्दछ महामति बुद्धिदाता॥
(८)
आशा लिएर कवि हिँड्दछ अर्थ ताकी।
अस्तित्व आत्मगरिमा अब छैन बाँकी॥
अन्यायको धन मिले पछि दान दिन्छन्।
स्रष्टाहरू अबुझ भै सब दान लिन्छन्॥
(९)

राखेर धूर्त भँडुवा शठ चाटुकार ।
बाँडेर कृष्ण धन खूब गरी प्रचार ॥
ठान्छन् कि ! ती भ्रम लिई कवि हुन् भिखारी ।
छन् आज आत्मरतिमा धनका पुजारी ॥
(१०)

राखी अहं सुजनको गरि मानभङ्ग ।
देखाई उच्च अभिमान र रङ्गढङ्ग ॥
अन्यायको धन दिई अति अल्प अंश ।
खोज्छन् यी बन्न बिचरा स्वकुलावतंस ॥
(११)

साहित्यका सतहमा पनि आज धेर ।
बढ्दो छ दुष्कृति निशाचर झैँ बनेर ॥
यी लाञ्छना कुयशबाट भएर टाढा ।
लेखून् सुकाव्य कवि भाव भरेर गाढा ॥
(१२)



# १९. प्रकीर्ण कवि

ऊ काव्य धेर कविता पनि लेख्न सक्छ।
ऊ क्रान्तद्रष्ट ऋषि हो सब देख्न सक्छ॥
काढेर राल मुखबाट सहस्र भारी।
गर्जन्छ सिंहसरि हात दुवै बजारी॥
(१)

जाऊँ जहाँ घुमिघुमी म अगाडि हुन्छ।
भेट्यो कि नम्र अति भै बहुतै नुहुन्छ॥
ऊ मिल्छ आलुसरि उग्र स्वभाव छैन।
वाणी छ खालि मुखमा तर भाव छैन॥
(२)

ऊ बोल्नमा चतुर हो नवनीत घस्छ।
व्यङ्ग्योक्तिमा कुशल हो मुटुसम्म घस्छ॥
स्तुत्यादिमा मसक हो पछिबाट खान्छ।
मौका परे अघि सरीकन लात हान्छ॥
(३)

ऊ ठान्छ सक्षम स्वयम् बहुतै चलाख।
ऊ राजनीतितिर राख्तछ खूब चाख॥
नेतासँगै स्वजनकासँग राख्छ मेल।
चाणक्य ठान्दछ र गर्दछ नित्य भेल॥
(४)

आँखा र कान कमजोर भए विचित्र।
फस्तो छ ऊ तर अझै व्यवहार भित्र॥
सेतो कपाल छ कतैतिर छैन कालो।
कालो छ भित्र मन छैन कतै उज्यालो॥
(५)
ऊ मात्र हो चतुर शिक्षित मूर्ख बाँकी।
चर्केर बोल्दछ अझै पनि जोश डाकी॥
सामान्य ठान्दछ अरू जति नै गुणी हुन्।
ठूलो छ घोषित स्वयं भुसुना अरू हुन्॥
(६)
ऊ बोल्छ मूर्तिसरि भै सुनिराख्नु पर्ने।
ताली दिएर अति तारिफ गर्नुपर्ने॥
गम्की गमक्क सबका सँग खोज्छ मान।
आफैँ छ आत्मरतिमा नटुवा समान॥
(७)
हेँला छ नित्य घरमा सुतबन्धु भागे।
जो जो थिए दमित ती पनि आइलागे॥
गल्दै गयो क्रमसँगै तन धर्मरायो।
तृष्णा जवान छ अझै नहुँदो गरायो॥
(८)
ऐले छ फुर्सद बरा अवकाश पाई।
सुन्दैन तै पनि अझै हितको भनाइ॥
मौका परे दिनदिनै मधुपेय तान्छ।
पच्तैन वस्तु जुन नित्य लिएर खान्छ॥
(९)

फोक्सो छ जीर्ण बहुतै दमले सतायो।
अत्युच्च चाप हुन गै मुटु झन्झनायो॥
सुक्तै गयो तन सबै मधुमेह लागी।
बाँच्ने अझै छ मन तैपनि भीख मागी॥
(१०)

जान्दैन छन्द पद शब्द र वाक्यभेद।
लिङ्गानुशासन न जान्दछ जातिभेद॥
बोल्दैन शुद्धसँग तै पनि काव्य लेख्छ।
ठूलो महाकवि हुने अझ स्वप्न देख्छ॥
(११)

लागेर रोग तन जर्जर जीर्ण पार्‍यो।
दुर्दैवले क्रमसँगै सब दाँत झार्‍यो॥
लाठी छ आश्रय बुता अब दूर भाग्यो।
बाँच्ने अझै पनि हरे कुन रोग लाग्यो॥
(१२)

झुर्री परे मुखभरी सब केश पाके।
आँखा भए मलिन हात र पाउ थाके॥
सम्झी समस्त अधिको रति ग्राम्यधर्म।
लेख्तै छ काव्य बिचरो नलिएर शर्म॥
(१३)

लेख्तैन आज उसले जुन लेख्नु पर्थ्यो।
देख्तैन वृद्धवयमा जुन देख्नु पर्थ्यो॥
सौन्दर्यशास्त्र अझ पढ्दछ काव्य लेख्छ।
संसार यो सकल नै अझ रम्य देख्छ॥
(१४)

इच्छा अझै छ धनको अझ खोज्छ मान।
गोष्ठी र बैठक सबैतिर खोज्छ जान॥
लम्किन्छ भौतिक कुरातिर बारबार।
सत्सङ्गधर्मतिर छैन कुनै विचार॥
(१५)

यो खण्डमा अति सचेत भएर मैले।
उत्कीर्णको पनि बयान गरेँ क्रमैले॥
मैले दुराग्रह र आग्रह दूर सारी।
लेखेँ प्रवृत्ति कविलेखकको विचारी॥
(१६)



# २०. गजल

गजलमा सबको मन गैसक्यो ।
अब त को.क. यसै दृढ भै सक्यो ॥
कविहरू यसमै यश देख्तछन् ।
बलगरी गजलै सब लेख्तछन् ॥
(१)

न छ खुबी यसमा लय गाउन ।
न छ गला सुरिलो सुर लाउन ॥
सहज बुझ्दिनँ भाव कुनै पनि ।
गजल नै मन पर्दछ तै पनि ॥
(२)

नबुझुँ लक्षण या यसको पन ।
गजलतर्फ दिऊँ सबले मन ॥
गजलमै छ बुझे सबको जय ।
गजलतर्फ बढौँ अब निर्भय ॥
(३)

गजलमा अघि बढ्न घरै बसी ।
अब सिकौँ उरदू अनि फारसी ॥
गजल लेख्न सिकौँ नगरी ढिला ।
अब छ बन्नु भने सब चम्किला ॥
(४)

गजलले सबतर्फ बढाउँछ।
सहज जाँगर जोश चढाउँछ॥
सुगतिमा मति लाग्छ निरन्तर।
सफल बन्दछ जीवन आखिर॥
(५)
गजल नै नबुझी कवि जो गए।
अब त ती नभए सरहै भए॥
मन दिई जति कष्ट भए पनि।
गजल लेख्न सिकौँ जसरी पनि॥
(६)
गजल नै नभए पनि के भयो।
गजलकार भनी दरिए भयो॥
नव विधा सबले अब सिक्नु छ।
चुरफुरे फुरती अब झिक्नु छ॥
(७)
सकलबाट उतारुँ भकाभक।
नकल खूब गरौँ नलिई धक॥
जुनसुकै तरिका पनि गर्नु छ।
गजलकार भईकन मर्नु छ॥
(८)
स्वर छ गर्दभ झैँ अति कर्कश।
सकलमा छ कनिष्ट र नीरस॥
कविहरू सबमा छ निकै लुलो।
गजल लेख्न सके तर भो ठुलो॥
(९)

कृषकझैँ मलिलो थलमा भरौँ।
गजल कोमलमा जलले भरौँ॥
सुर कसी नबसी यसमा पसौँ।
अघि सरौँ सबले पटुका कसौँ॥
(१०)
अति छिटो यसको कटनी गरौँ।
सरस यो सबले चटनी गरौँ॥
अब छ के यसकै भरमा परौँ।
गजल निम्ति जिऔँ अथवा मरौँ॥
(११)
गजलमा अब नाम सिधै दरौँ।
सुमनझैँ मन यो यसमै छरौँ॥
गजलको गुणगान सधैँ गरौँ।
गजलकै अब लौ भरमा परौँ॥
(१२)
सनत हुन् अथवा कवि वाकर।
गजलकार दुवै अति तिक्खर छ॥
अब कला यिनको सब झिक्नु छ।
यिनसँगै सबले अब सिक्नु छ॥
(१३)
गजलको जयगान यथामति।
सहजमा गरियो सकियो जति॥
गजलका जति छन् कवि पण्डित।
शरद माग्दछ माफ सबैसित॥
(१४)



# २१. भानु

तिम्रो छ सम्झना भानो ! खालि केवल सम्झना ।
भानो ! के कविता लेखौँ ! खालिमात्र छ सम्झना ॥
अमरावती जो देख्थ्यौ देख्तैनौँ त्यो कतै अब ।
चपला अबला तिम्रा सबला भै सके सब ॥
(१)
तिमीले जो दियौ भाषा कविता काव्य जे दियौ ।
राष्ट्रका लागिमा भानो ! जिउँदो चेतना दियौ ॥
त्यसैका भरमा हामी बाँचेका छौँ अझै पनि ।
त्यही आज बगेको छ मृतसञ्जीवनी बनी ॥
(२)
भाषा छ तर हे भानो ! भावना भासिँदै गयो ।
हाम्रो एकत्वको भाव बिस्तारै मासिँदै गयो ॥
तिमीले जो दियौ भानो ! हाम्रा लागि ठुलो थियो ।
ठाडो शिर गरी बाँच्ने आधार त्यसले दियो ॥
(३)
तर त्यो बिर्सियौँ क्यारे एकत्व अब वैलियो ।
हाम्रो संस्कृतिसंस्कार बिस्तारै सब मैलियो ॥
चारैतिर छ घुर्मैलो अँध्यारो घुप्प कालिमा ।
देखिँदैन कतै टाढा पूर्वमा मन्द लालिमा ॥
(४)

राख्छौ कति अँध्यारोमा आँखा बन्द भई सके ।
        हाम्रा स्नेह र सद्भाव अँध्यारोमा गई सके ॥
झुल्क भानो ! यहाँ फेरि फ्याँक यो हुस्सुको दल ।
        फैलाऊ पहिले जस्तो ज्योति सुन्दर निर्मल ॥
(५)

छोराछोरी नव समयको सभ्यतामा बिलाए ।
        ड्याडी मम्मी घर घर भए बाबुआमा हराए ॥
भाषा बोली अब बदलिए भेष नौलो छ आज ।
        हेर्दाहेर्दै सब बदलियो भानु तिम्रो समाज ॥
(६)

मेरै आफ्नो वरिपरि यहाँ देख्छु संत्रस्त सारा ।
        यद्वा हामी अब भइसक्यौँ पङ्गु वा बेसहारा ॥
कालो चारैतिर छ कुहिरो भानु ! तत्काल आऊ ।
        फ्याँकी मैलो गहनतम यो स्वच्छ आभा फिँजाऊ ॥
(७)



# २२. ज्योतिःपुञ्ज

हे भानो ! सम्झना पुष्प रित्ता हात भरी लिई।
गर्छु अर्पण श्रद्धाले तिम्रा सद्गुण सम्झिई ॥
राष्ट्रको एकता सूत्र तिमीले पहिले दियौ।
हामीलाई जगाएर तिमी तत्काल अल्पियौ॥
(१)
तिम्रै भाव सँगालेर हामी अघि सधैँ बढ्यौँ।
अति नै जोशले हामी अग्ला शिखरमा चढ्यौँ॥
नेपाली जातिको मान तिमीले भानु जो दियौ।
हाम्रा निस्पट्ट आँखा यी उघार्ने भानु नै थियौ॥
(२)
किन हो आज यो आभा सबै धूमिल भैसक्यो।
हाम्रो राष्ट्रिय सद्भाव डाँडा काटेर गैसक्यो ॥
कहाँ छ एकता सूत्र ? नेपाली बाँच्तथ्यौँ जहाँ।
कहाँ आँगन साझा छ ? सबै नै नाच्तथ्यौँ जहाँ॥
(३)
कहाँ छन् ? अब ती गाउँ जहाँ गीत सुसेल्दथ्यौँ।
आफ्नू हृदय खोलेर जहाँ भाव उगेल्दथ्यौँ॥
रामायण जहाँ हुन्थ्यो प्रत्येक घरको यश।
घन्कन्थे भानुका भाका प्रेमसाथ अहर्निश ॥
(४)

तिनै गाउँहरू आज बिरानासरि भैसके ।
तिम्रो सत्कार्य बिर्सेर पछाडि सब गैसके ॥
ज्यूँदो जातीय सद्भाव आज मर्दै गई सक्यो ।
डँडेलो गाउँबस्तीमा सर्ने त्रास भई सक्यो ॥
(५)
यस्तो सङ्कष्ट वेलामा तिमी आउनु पर्दछ ।
राष्ट्रको भावना जोड्ने गीत गाउनु पर्दछ ॥
क्षतविक्षत संस्कार भावना जोड्नु पर्दछ ।
हुस्सूको फैलँदो जालो तिमीले तोड्नु पर्दछ ॥
(६)
चेतना सकियो हाम्रो हामी जड भई सक्यौँ ।
जिजीविषा मऱ्यो हाम्रो हामी पङ्गु भई सक्यौँ ॥
आऊ भानु ! तिमी आऊ रामायण नयाँ लिई ।
फैलाऊ चेतना नौलो मृतसञ्जीवनी दिई ॥
(७)
आकाशबाट हे भानो ! तिमी नेपालमा झर ।
हटाऊ कालिमा हाम्रो प्रकाश सबमा भर ॥
ढिला नगर हे भानो ! पाउ चालेर सत्वर ।
आऊ हे ज्योतिका पुञ्ज ! तिम्रै नेपाल हो घर ॥
(८)



# २३. फेरि नयाँ वर्ष आयो

बोकी विगतको भारी पर्खिएर अनागत ।
        ऐले आगतका साथ लड्छु खर्चेर तागत ॥
पुराना वर्ष फेरेर नयाँ वर्ष सजाउँछु ।
        म तिनै साथमा आज खुशीयाली मनाउँछु ॥
(१)

पुरानो वर्ष भागेछ मृत्यु बोकेर साथमा ।
        नयाँ वर्ष यहाँ आयो मृत्यु बोकेर माथमा ॥
जता हेऱ्यो उतै मृत्यु हजारौँ मृत्यु देख्तछु ।
        अब ता कविता लेख्ता म सधैँ मृत्यु लेख्तछु ॥
(२)

मान्छेको भीड देखेर म साह्रै नै डराउँछु ।
        सुत्छु ऐठन बोकेर सपनामा कराउँछु ॥
यो कस्तो जिन्दगानी हो कहाँ छ यसको हद ।
        बाँच्नका लागि नै मर्छु प्रत्येक दिन सायद ॥
(३)

आएको छ नयाँ वर्ष फेरि फर्केर नाहक ।
        जताततै छ चर्केको घिनौनो मृत्युवाहक ॥
भैरम्पाती र धूपीमा लासको गन्ध आउँछ ।
        अब ता मृत्यु देखेर मृत्यु आफैँ डराउँछ ॥
(४)

नेपाली नित्य मर्दैछन् संत्रास छ जतातता ।
आमा पागल जस्ती भै दौडिइन्छिन् यताउता ॥
चारैतर्फ छ आतङ्क ताडना अनि यातना ।
कसरी म दिऊँ ? ऐले शुभेच्छा शुभकामना ॥
(५)
राजालाई पचाएर पुरानू वर्ष जो गयो ।
त्यसैको पछि लागेर यो नयाँ वर्ष झुल्कियो ॥
खूनी हात पसारेर गर्दै चीत्कार क्रन्दन ।
कालो छाया फिँजाएर मृत्यु घुम्दैछ फन्फन ॥
(६)
चारैतर्फ म देख्तै छु रातो ज्वाला भयङ्कर ।
लामो जिब्रो निकालेर बढ्न थाल्यो यतैतिर ॥
हात नै भाँचिएका छन् संत्रस्त छ यहाँ मन ।
कसरी म गरौँ ऐले यसको अभिनन्दन ॥
(७)
चिनेका चेहरा धेरै देखिँदैनन् कता गए ।
पुराना वर्षका साथै अन्तर्धान सबै भए ॥
दुःखमग्न छ यो देश शोकमग्न छ भावना ।
कुन उत्साह राखेर म दिऊँ शुभकामना ॥
(८)
नयाँ वर्ष २०५९ साल

# २४. कसरी स्वागत गरौँ ?

सन्त्रास व्याप्त छ सबैतिर भो अँधेरी ।
देखिन्छ उग्रतर घाम कतै खडेरी ॥
बढ्दो छ दुस्तर निशाचर राष्ट्र घेरी ।
आयौ यहाँ किन तिमी नव वर्ष फेरि ॥
(१)

चीत्कार सम्भ्रम विषाद लिएर साथ ।
बाँची रहेछ जनता निहुराइ माथ ॥
यो राष्ट्र नै भइसक्यो अहिले अनाथ ।
तिम्रो म स्वागत गरूँ कुन धैर्यसाथ ॥
(२)

हेरूँ जतातिर उतैतिर मृत्यु देख्छु ।
लेखूँ यहाँ म कविता सब मृत्यु लेख्छु ॥
विस्फोट सुन्दछु म देख्तछु लाश घाउ ।
तिम्रो म स्वागत गरूँ कसरी बताऊ ॥
(३)

देखिन्छ राष्ट्र अहिले अति खिन्न लस्त ।
सर्वांशमा भइसक्यो अब शान्ति अस्त ॥
आफन्तमै छ अहिले अति शत्रुभाव ।
देखिन्छ मानवपना सबमा अभाव ॥
(४)

दावाग्निले सकल नै अब खान लाग्यो ।
टाढा भयो मधुरिमा मधुमास भाग्यो ॥
बोल्दैन कोकिल यहाँ अब कण्ठ खोली ।
तिम्रो म स्वागत गरूँ कुन शब्द बोली ॥
(५)
छन् शत्रुझैँ अब सहोदर दाजुभाइ ।
उद्देश्य मास्नु छ बिगार्नु छ राष्ट्रलाई ॥
हावा बहन्छ अब बारुदगन्ध बोकी ।
संवेदना मरिसक्यो सब लाश हो कि ?
(६)
को शत्रु मित्र अनि कोसँग गर्नु आस ।
छुट्याउनै छ अति दुष्कर आज खास ॥
शङ्का गरेर सबका सँग दूर भागी ।
बाँच्ने सदैव कसरी ? सब मित्र त्यागी ॥
(७)
यो शान्तिको स्थल भयो इतिहासमात्र ।
हामी भयौँ सकल दुच्छर या कुपात्र ॥
ज्यूँदै मरेसरि भयौँ सब भस्म पारी ।
हिँड्छौँ अझै पनि यहाँ किन ? लाज मारी ॥
(८)
यी हात छन् रगतरञ्जित लाशयुक्त ।
हामी भयौँ अबुझझैँ अरूले प्रयुक्त ॥
आफ्नै छ नाश तर मस्त भएर हाँस्छौँ ।
हामी अझै पनि खुशीसँग आज बाँच्छौँ ॥
(९)

मर्छन् अनाहक निरन्तरको छ युद्ध ।
आशौचमा सकल राष्ट्र छ यो अशुद्ध ॥
छन् शोकमग्न जनता अनि भूपसम्म ।
तिम्रो म स्वागत गरूँ कसरी ? अचम्म ॥
(१०)

आपस्तमा अब कसैसँग प्रेम छैन ।
लड्छौँ परस्पर कतै शुभभाव छैन ॥
गाग्रा गिलास कसुँडी बम नै बनाई ।
मोर्चा बने घरहरू रण लड्नलाई ॥
(११)

यो राष्ट्रको पतनतर्फ छ आज खेल ।
राजाप्रजा सकलमा छ महा अमेल ॥
छन् मौन कोकिलहरू बन छन् उजाड ।
छन् फुङ्ग ध्वस्त रसिला हरिया पहाड ॥
(१२)

मेची चिरा छ अनि पश्चिम झन् चिरा छ ।
यो राष्ट्र धर्मर भएर महा चिरा छ ॥
हेरौँ जता सकल देख्छु चिरा चिरा छ ।
धेरै चिरा छ मन यो मुटु झन् चिरा छ ॥
(१३)

जल्दो छ राष्ट्र सबतर्फ छ आज नाश ।
मूर्दा समान सब छौँ सब छौँ हताश ॥
चस्कन्छ चस्चस गरी मुटुभित्र घाउ ।
तिम्रो म स्वागत गरूँ कसरी ? बताऊ ॥
(१४)

छन् लाश चारतिर चल्छ सढान्ध वायु ।
यो राष्ट्र जर्जर भई सकियो कि ! आयु ॥
सारा विखण्डित छ पङ्गु छ यो समाज ।
तिम्रो म स्वागत गरूँ कसरी म आज ॥
(१५)

जाऊँ जतातिर उतैतिर हुन्छु बन्द ।
नाका छ बन्द कहिले अनि देश बन्द ॥
कैले यहाँ अनि वहाँ सब बन्द बन्द ।
कैले छ पश्चिम खुला अनि पूर्व बन्द ॥
(१६)

मुर्दा समाज सब यो अब बन्द देख्छु ।
आँखा भए अब त बन्द न हेर्न सक्छु ॥
यो राष्ट्र निश्चल भयो सब बन्द देख्छु ।
के बन्दमा भन म स्वागत गर्न सक्छु ?
(१७)

*नयाँ वर्ष २०६१ साल*



# २५. वसन्तको अन्त

सुस्त सुस्त मधुमास हरायो ।
ग्रीष्मकाल नजिकै अब आयो ॥
जो भयो मधुर सन्त वसन्त ।
देखिने क्षणिक जीवन अन्त ॥
सुस्त धूमिलपना अब छायो ।
फूलको रस र रङ्ग हरायो ॥
भृङ्गको दल कतैतिर भाग्यो ।
खालि स्वार्थरतभैँ सब लाग्यो ॥
भृङ्गको दल बनेर अनाथ ।
या गयो कि ! कुसुमाकर साथ ॥
फूलको रस पिईकन धेर ।
लट्टियो कि अति मत्त बनेर ॥
जन्मिएँ म कुसुमाकर साथ ।
जन्मसाथ म भएँ उससाथ ॥
स्वान्तमा जब रहन्न अभाव ।
आउँछन् सहज सद्गुण भाव ॥
भन्छन् कोही सुखद ऋतु हो मोक्षदाता वसन्त ।
भन्छन् कोही शिवद ऋतु हो शान्तिदाता वसन्त ॥
यो हो यौटा हिमऋतु बिती आउने सौम्य सन्त ।
जल्ले देख्यो शिशिर ऋतु वा चिन्छ त्यल्ले वसन्त ॥



# २६. अधिकार र कर्तव्य

प्रभातको नयाँ ज्योति बर्सियो दिव्य वैभव।
मेचीकाली सम्हालेर उठ्नुपर्छ तिमी अब ॥
बुकीफूल सधैँ फुल्ने खर्क नागी र लेकले ।
तिम्रो नै पथ हेर्दैछ तिम्रो दुर्गम भेकले ॥
देशका टाकुरी माथि गरिद्यौ नव सिर्जना ।
यिनै पाखापखेरामा छर उद्दीप्त भावना ॥
उठ छाडेर कार्पण्य तन्द्रा आलस्य सम्भ्रम ।
तिमी कर्मठ छौ सक्छौ गर्न पूर्ण परिश्रम ॥
देशले पसिना माग्छ मुटुले माग्छ धड्कन।
गर यै देशको माटोलाई पक्रेर चुम्बन ॥
देश तिम्रो सबै तिम्रो तिम्रो नेपाल हो घर।
देशकै निम्तिमा बाँच्न मर्न हौ अब तत्पर ॥
अधिकार त हो प्राप्ति न दिइन्छ लिइन्छ यो।
जल्ले गर्दछ कर्तव्य त्यल्ले नै प्राप्त गर्छ यो ॥
तिम्रो हिम्मत हो कृष्ण ! कर्मयोग पढाउन ।
उठ हे देशका पार्थ ! यो नेपाल बनाउन ॥

*(२०२६ सालमा नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानद्वारा आयोजित राष्ट्रिय कविसम्मेलनमा सर्वप्रथम भएर राजा महेन्द्रबाट सुवर्णपदकले विभूषित भएको कविता)*



# २७. स्वच्छ मन

विष सरी कसरी सब यो भयो।
तर भयो सब यो जसरी भयो॥
विगतमा गति वक्र हुँदो भयो।
सकलमा कल भो सब गैगयो॥
(१)

कुमतिको मतिमा सबको मति।
जब गयो तब भो अति दुर्गति॥
दिनदिनै खिइँदै क्रमले गयो।
अब त यो नभए सरहै भयो॥
(२)

क्षति भयो जति जो सहने कति।
मन भए नभए पनि सम्प्रति॥
अब कहाँ कसले सब भर्दछ।
मनपरे नपरे पनि गर्दछ ॥
(३)

अघि जुटे सबका सब टाँसिए।
अब भए शव झैँ सब मासिए॥
मनपरी अब ता उसकै भयो।
क्रमसँगै सब साफ हुँदै गयो ॥
(४)

विषममा सम छन् जति छन् सब।

विगतको मतमा रत छन् अब॥

पर भए पनि छन् तर साथमा।

सकल शून्य छ आखिर हातमा॥

(५)

पवनझैँ वनमा किन हल्लिनु।

कितवझैँ कि ! त ती सब नै हुनु॥

नहुनु भित्र हुनै छ बडो तर।

नुहुनु भित्र सधैँ हुनु उत्तर ॥

(६)

विमतिवारण वा रणमा थियो।

विगतमा सब तागत खर्चियो॥

जब भयो शिशुपाल लुरे भयो।

अब गयो सकियो सजिलै गयो॥

(७)

दलसँगै दरिला जति जो थिए।

सकल ती कलकारण देखिए॥

विपदमा पदमा सब मस्त छन्।

स्वजनकै मुटुमा मुङ घस्तछन्॥

(८)

जति भयो धन झन् मन बढ्दछ।

अझ बढी यसले बुइ चढ्दछ॥

सुजनसाथ सदैव डराउँछ।

कुजनसाथ भनेसँग आउँछ॥

(९)

नहुनुमा जसले सुख मान्दछ।

हथकडी जसले धन ठान्दछ॥

जब भयो मन तुष्ट सरासर।

नहुनुमा हुनुमा छ बराबर ॥

(१०)

जति गरे पनि कोसँग जान्छ के ?

सकल छुट्तछ आखिर लान्छ के ?

मन छ तृप्त सबै छ बराबर।

मनुज बन्छ सधैँ अजरामर॥

(११)

हृदय बन्छ जहाँ अति निर्मल।

विमल कोमल हुन्छ विनामल॥

सहज बन्दछ जीवन शीतल।

सकल बाहिर जान्छ हलाहल॥

(१२)

धन भए नभए पनि के भयो।

मन भयो खुश जो सब नै भयो॥

सकलको कलको जड जो भयो।

समल दुच्छर दुष्कृतमा गयो॥

(१३)

मन बुझ्के नबुझ्के पनि भै गयो।

बखतमा खत माफ सबै भयो॥

अतलको मल तत्क्षणमा गयो।

हृदय शान्त सफा जहिले भयो॥

(१४)

जलन अन्तरको तब भाग्दछ।

अगममा मन यो जब लाग्दछ॥

शुभद बन्दछ भाव सधैँ भर।

मन सफा जब हुन्छ निरन्तर॥

(१५)



# २८. के लेखौँ कविता भन ?

जता हेर्‍यो उतै त्रास आतङ्क छ निरन्तर ।
        गोली र बम पड्केर  चीत्कार  छ  भयङ्कर  ॥
डाँफेमुनालका बस्ती बने उजाड जर्जर ।
        कविता कसरी लेख्ने ? बताऊ कवि सत्वर ॥
(१)

एकान्त गाउँबस्तीमा पड्कन्छन् घातकी बम ।
        अविश्वास र आशङ्का  निरन्तर  छ  सम्भ्रम  ॥
कविका भाँचिए हात भाँचियो अझ झन् मन ।
        कसरी कविता लेख्ने ? तिमी नै कविजी भन ॥
(२)

हावामा गन्ध घोलेर कालो बारुद चल्दछ ।
        पड्केर बमको गोला शान्तिको घर जल्दछ  ॥
मेरो वसन्तको हावा डाँडा काटी गई सक्यो ।
        मेरो यो शान्तिको क्षेत्र युद्धक्षेत्र भई सक्यो   ॥
(३)

मान्छेका लासका माथि मान्छे आसन कस्तछ ।
        आफ्नू नै दाजु  मारेर भाइ  हाँसेर  बस्तछ  ॥
यो कस्को रोग हो ? ऐले हाम्रो नेपालमा सर्‍यो ।
        हाम्रो शान्ति र सद्भाव यल्ले नाश सबै गर्‍यो ॥
(४)

लालीगुराँसमा ऐले आगो लागेछ दन्दन।
कोइली बास्न छोडेर गर्छे चीत्कार रोदन॥
जोडी ढुक्कुरका ऐले छिन्नभिन्न भई सके।
छोडेर शान्तिको क्षेत्र टाढा टाढा गई सके॥
(५)

दुखेको छ यहाँ छाती छिया छिया छ यो मन।
भावना भत्किएको छ, के लेखौँ ? कविता भन॥
देशमा अग्निको ज्वाला ढाकी पूर्व र पश्चिम।
सल्किएको छ, हेर्दैछु ढुङ्गो सरि बनेर म ॥
(६)

खोलो रगतको आज बगेको छ जतातता।
म कस्का नाममा रोऊँ ? दौडिऊँ म कताकता॥
छातीमा शान्ति नै छैन अशान्ति छ जहाँतहाँ।
म आफैँ छरिएको छु हिँडूँ खोज्दै कहाँकहाँ॥
(७)

अब त्यो भाव नै छैन तार बज्दैन भन्भन।
कसरी कविता लेख्ने ? तिमी नै कविजी भन॥
कविजी उठ तातेर सुत्ने बेला गई सक्यो।
मेचीकाली सम्हालेर जुट्ने बेला भई सक्यो॥
(८)

बाटो भुल्नेहरूलाई सम्भाऊ अब बेसरी।
गरिद्यौ शान्तिको वर्षा बर्साई कविता भरी॥
मनमा शान्ति नै छैन उद्विग्न छ जहाँ मन।
कविता कसरी लेखौँ ? कविजी अब ता भन॥
(९)



# २९. अर्ती

देखिन्छन् ननिका कुलक्षणहरू सर्वत्र नेपालमा ।
लेखेको छ कि ! भाग्यले विथिति नै नेपालको भालमा ॥
देखिन्नन् गतिला सुपात्र अहिले नेताहरू देशमा ।
गर्छन् राज्य चरित्रहीन बहुधा सत्पात्रको भेषमा ॥
(१)

नाङ्गो नाच छ आज दुष्टजनको हेऱ्यो जता आखिर ।
अत्याचार छ उग्र यो मुलुकमा छन् भ्रष्ट चारैतिर ॥
जल्ले जे जति भेट्छ लुट्तछ यहाँ लाजै नमानीकन ।
स्वार्थी वञ्चक चाटुकार अति छन् सानो छ छाती मन ॥
(२)

ऐले राष्ट्र छ घाटमा घिटघिटी क्यै सासभैँ फेर्दछ ।
राम्रा योग्य सपूत देख्छु कि ! भनी आशा गरी हेर्दछ ॥
देख्ता बाहिर शोकमग्नसरि छन् जो घाटमा छन् बडा ।
कात्रोसम्म तयार लुट्न सब छन् जो घाटमा छन् खडा ॥
(३)

हाम्रा नीति समग्र निष्फल भए गिर्दो छ अर्थस्थिति ।
डामाडोल छ शान्ति शासन सबै डुब्दो छ राज्यस्थिति ॥
हाम्रा संरचनाहरू क्रमसँगै छन् ध्वस्त चारैतिर ।
कल्ले राष्ट्र बचाउला अब यहाँ पर्दा विपद् आखिर ॥
(४)

हाम्रा आज विकासका पथहरू सर्वांशमा बन्दछन् ।
हाम्रो बौद्धिक चेतना जड भयो सोचाइ नै मन्द छन् ॥
साह्रै सुस्त भएर शासकहरू बाँकी घडी गन्दछन् ।
बाँच्नै मुस्किल भो भनेर जनता अत्यासमा भन्दछन् ॥
(५)

हाहाकार विभीषिका मुलुकमा देखिन्छ जो सम्प्रति ।
विद्रोहीजनबाट पीडित भई बाँच्नै भयो धौ अति ॥
सत्तापक्ष विपक्षका सकल ती नेता कुनै अंशमा ।
होलान् दोषविहीन आज कसरी ? नेपालको ध्वंसमा ॥
(६)

नेता हो गर काम शुद्ध मनले नेपालका नाममा ।
साह्रै जागृत भै तिमी अधि बढे सन्मार्ग सत्काममा ॥
जो जो छन् पथभ्रष्ट दुष्कृतहरू सारा समेटीकन ।
ल्याऊ सत्पथमा सँगै बढ तिमी एकत्वमा दी मन ॥
(७)



# ३०. जो छैन परिदृश्यमा

हिमालमा ढल्यो कोही कोही पहाडमा ढल्यो ।
मधेशमा ढल्यो कोही गाउँ शहरमा ढल्यो ॥
जो जो जहाँ ढले हाम्रा आफ्ना सन्तान नै ढले ।
हाम्रा गाउँ र बस्तीका झुपडी घर नै जले ॥
(१)
हामीलाई यहाँ फेरि हाम्रो दुर्भाग्यले ठग्यो ।
जहाँ जहाँ बग्यो हाम्रो तातो रगत नै बग्यो ॥
कोलाहल र चीत्कार तिम्रो प्रिय भई सक्यो ।
सद्भावना मऱ्यो आज स्नेह टाढा गई सक्यो ॥
(२)
जो जो छौ युद्ध संलग्न सारा हौ मृत्युवाहक ।
आफ्नू नै नाश गर्दै छौ विनाहोश अनाहक ॥
यो युद्ध जीतको हैन हारको तिमी लड्दछौ ।
जता बढ्छौ तिमी ऐले अँध्यारातिर बढ्दछौ ॥
(३)
जता हेऱ्यो उतै आज सन्त्रास अन्धकार छ ।
तिमी के लड्दछौ युद्ध जहाँ केवल हार छ ॥
छिया छिया बनाएर राष्ट्र सम्पूर्ण भाग्दछ ।
आखिरी हातमा तिम्रो निर्जीव शून्य लाग्दछ ॥
(४)

नेपालै नरहे योद्धा कहाँ आसन कस्तछौ ।
खरानी हुन्छ यो देश कहाँ जान्छौ र बस्तछौ ॥
के जितौला तिमी युद्ध जो छ दूर अदृश्यमा ।
यो युद्ध उसले जित्छ जो छैन परिदृश्यमा ॥

(५)

२०५९ साल चैत्र



# ३१. हाम्रो वर्तमान

छ राष्ट्र आज पङ्गु झैँ निरीह यो भई सक्यो ।
छ खालि भित्र धुक्धुकी स्वअस्मिता गई सक्यो ॥
जता गयो छ ध्वंस यो उजाडझैँ भई सक्यो ।
उडेर सुस्तसुस्तरी कताकता गई सक्यो ॥

(१)

छ आस तै अझै कतै अबेर वा भई सक्यो ।
दिगन्तसम्म यो उडी सुदूर वा गई सक्यो ॥
विडम्बना छ राष्ट्रमा विभीषिका छ उर्लंदो ।
जता गयो उतैउतै छ मृत्यु आज कुर्लंदो ॥

(२)

सुशान्तिको निवास हो सुसौम्य शम्भु बस्तछन् ।
हिमाल हाँस्छ छेउमै बनाउँदै सुशान्त झन् ॥
तथापि आज के भयो ? अशान्ति फैलियो यहाँ ।
छ राहुको प्रकोपझैँ स्वराष्ट्रमा जहाँतहाँ ॥

(३)

लुटिन्छ अस्मिता सधैँ कहाँ गई लुकाउने ।
छ भित्र घाउ बल्किँदो कहाँ गई सुकाउने ॥
तुषाग्निझैँ अथाहमा छ राप झर्झराउँदो ।
डढेर भित्रभित्र नै छ राष्ट्र चर्मराउँदो ॥

(४)

छ नीति लर्खराउँदो छ राजनीति अस्थिर ।
निरीहता विपन्नता छ राष्ट्रमा सबैतिर ॥
लडेर दाजुभाइ नै समग्र नाश भै सके ।
भविष्य अन्धकार भो युवा मरेर गै सके ॥
(५)

स्वदेश नै विदेश भो डराउँदै गई सक्यौँ ।
स्वअस्मिता भुलेर नै हराउँदै गई सक्यौँ ॥
जताततै छ लासको असह्य नग्न दर्शन ।
छ शान्ति क्षेत्रमा सधैँ नृशंस यो प्रदर्शन ॥
(६)

रुँदी छ न्याउली चरी डढेर वास नाश भो ।
झरेर आँसु बर्बरी हिमाल झन् उदास भो ॥
नखेल धेर खेल यो जहाँ छ खेल रक्तको ।
डढेर भस्म होउला सरापले अशक्तको ॥
(७)



# ३२. बाटो भुलेकालाई

नेपाली जनका सुशान्त मनमा सन्त्रास फैलाउँछौ ।
हाम्रा शान्त पहाड गाउँघरमा आगो तिमी लाउँछौ ॥
बाँच्ने शाश्वत मानवीय हक नै हाम्रा तिमी हर्दछौ ।
हौ भस्मासुर भस्म यो सब गरी आफैँ तिमी मर्दछौ ॥

(१)

छात्राछात्र अबोध बालकहरू आतङ्कमा तान्दछौ।
भावी सुन्दर राष्ट्रवाहकहरू उन्मादमा हान्दछौ॥
वृद्धावृद्ध अशक्त शिक्षक सुधा ज्ञानी गुणी मार्दछौ।
हौ भस्मासुर भस्म यी सब गरी बाजी तिमी हार्दछौ ॥

(२)

हाम्रा शाश्वत मान्यतास्थितिहरू उद्‌दण्ड भै तोड्‌दछौ।
हाम्रा सुन्दर धाम मन्दिरहरू उन्मादमा फोड्‌दछौ ॥
गाईको वध गर्दछौ अबुझ भै के के तिमी गर्दछौ।
सारा नाश गरी परन्तु पछुतो गर्दै तिमी मर्दछौ ॥

(३)

पुर्खाले अति दुःखसाथ पहिले यो राष्ट्र जोडी दिए।
ढिक्का एक भएर शत्रुसँगमा पुर्खा लडेका थिए ॥
बिर्सेछौ इतिहास गौरवसँगै अस्तित्व आफ्नू पनि।
पार्छौ राष्ट्र धुजाधुजा अब हरे कस्ता तिमी बैगुनी ॥

(४)

हाम्रा शैल पहाड पर्वत गुफा ओडार या जङ्गल ।
योगी तापसका निमित्त पहिले हुन्थे तपस्यास्थल ॥
ऐले तालिमकेन्द्र ती सब बने आतङ्क बस्ने घर ।
हाम्रा प्राकृत शान्तिका स्थलहरू पाऱ्यौ सबै जर्जर ॥

(५)

अर्काको शिर फोर्नमा कुशल छौ हत्या सधैँ गर्दछौ ।
लुट्छौ राष्ट्रिय सम्पदा लुछिचुँडी खाई भुँडी भर्दछौ ॥
गोली बारुद साथमा बमहरू बोकी सधैँ हिँड्दछौ ।
आफ्नै दाजु र भाइको क्षय गरी आपस्तमा भिड्दछौ ॥

(६)

तिम्रो के छ ? अभीष्ट यो सब गरी खोलेर छाती भन ।
सारा राष्ट्र विनाश जर्जर गरी बस्छौ कहाँ गैकन ॥
खाफू नै अब खन्दछौ दिनदिनै आफ्नै स्वयंको जरो ।
खुट्टामा किन हान्दछौ अबुझ भै आफैँ स्वयं बन्चरो ॥

(७)

हाम्रा सुन्दर शैलपर्वतहरू हुन् ईशका मन्दिर ।
डाँडा उच्च हिमाल जङ्गलहरू हुन् देवताका घर ॥
सोझा छन् जनताजनार्दन सधैँ सत्कार्यमा तत्पर ।
तिम्रो कुत्सित कार्यबाट अहिले सारा भए जर्जर ॥

(८)

हाम्रो वैदिक धर्म भन्छ सबमा यौटै छ आत्मा सदा ।
प्राणीमात्र समस्तको हित हुने सत्कार्य हो सर्वदा ॥
हाम्रो मानवधर्म यो सब भुली अत्यन्त टाढा गयौ ।
आफ्नै दाजु र भाइका रगतमा चुर्लुम्म डुब्ने भयौ ॥

(९)

कोही मर्छ यता उतातिर कुनै विस्फोटमा मर्दछ।
मर्ने दाजु र भाइ हुन् रगत हो यौटै उही झर्दछ॥
आमाका मुटुमा असह्य यसको धक्का सधैँ पर्दछ।
सारा राष्ट्र भएर आहत यहाँ चीत्कार नै गर्दछ॥
(१०)
निर्दोषी वनपुष्प कुड्मलहरू तोड्ने तिमी नै भयौ।
भावी सन्ततिका धरोहरहरू सारा बिगार्दै गयौ॥
लेख्ने हातहरू बढे क्रमसँगै हत्या र आतङ्कमा।
हाम्रा सिर्जनका अनन्त सपना गाड्यौ महा पङ्कमा॥
(११)
विद्वान् शिक्षक मातृशक्ति जननी ज्ञानी गुणी मार्दछौ।
हाम्रा शाश्वत सभ्य संस्कृत कुरा पोली धुजा पार्दछौ॥
पार्छौ भ्रष्ट सुधा निरीह बबुरा कन्याकुमारीहरू।
दिन्छौ तालिम हान्न बन्दुक खुँडा गोला र गोलीहरू॥
(१२)
हाम्रा प्राकृत सौम्य शुद्ध युवती नारीहरूमा पनि।
सल्कायौ ननिको कुसङ्गत लुतो खूनी लडाकू बनी॥
जो जो छौ उसतर्फ उग्र अहिले बिग्रेर टाढा गयौ।
हाम्रो संरचना समाज सहसा सारा बिगार्ने भयौ॥
(१३)
भत्काऊ जति नै बिगार सब यो आफ्नै बिगार्छौ तिमी।
नेपाली जनको समग्र धन यो विध्वंस गर्छौ तिमी॥
मारामार गरेर नासिन गए हाँस्लान् छिमेकीहरू।
हाम्रो इज्जत जान्छ हुन्छ फजिती दुत्कार गर्लान् बरु॥
(१४)

नेपाली पहिले बहादुर भनी सत्कार गर्थे सब ।
तिम्रै कारणले कलङ्कित भयौँ दुत्कार गर्छन् अब ॥
नेपाली अहिले असंस्कृत भयौँ हामी पछौटे भयौँ ।
हामी सभ्य समाजबाट सहसा भागेर टाढा गयौँ ॥

(१५)

हाम्रा दीन गरीब वृद्ध वनिता मार्छौ कुना लाउँछौ ।
नेपाली जनका विकासपथका आधार भत्काउँछौ ॥
गर्दैछौ जति नाश यो मुलुकको लेखेर के सक्तछु ?
हामी बर्बर जातिमा कहलिने सम्भावना देख्तछु ॥

(१६)

हामी बन्द भएर अन्धयुगमा बस्नै परेको थियो ।
धेरै वर्ष लडी बहाल हुन गो हाम्रो प्रजातन्त्र यो ॥
ऐले त्यो पनि मास्न उद्यत भयौ कल्ले इशारा गऱ्यो ।
योभन्दा पनि मिल्छ के ? अझ बढी सोच्नै तिमीले पऱ्यो ॥

(१७)

सारै दूर गयौ नृशंसित भयौ फर्केर आऊ अब ।
छोड्द्यौ दुष्कृत काम जे जति गऱ्यौ सन्ताप मानी सब ॥
फर्की झट्ट सुमार्गमा पस तिमी यो राष्ट्रका धारमा ।
पुग्ने छौ पछि लक्ष्यमा क्रमसँगै आफ्नै जनाधारमा ॥

(१८)

*२०५८ वैशाख*



# ३३. हाउ

अब म जान्न उतातिर हाउ छ।

हृदयमा अति दुस्सह घाउ छ॥

म भनुँ नाम भनेर डर लाग्दछ।

जति दियो तर झन् उति माग्दछ॥

(१)

भवनमा वनमा घर गाउँमा।

घुमिरहन्छ सधैँ हरठाउँमा॥

अति कठोर छ गर्छ ढली मली।

जति मिल्यो उति निल्छ डरै नली॥

(२)

अलप भै नभएसरि बस्तछ।

बल गरी घरमा तर पस्तछ॥

जनसँगै सबको धन हर्दछ।

मनपरी उसले सब गर्दछ॥

(३)

मनुज हो भनुँ काम छ बर्बर।

दनुज हो भनुँ देख्तछु वा नर॥

अघिसरी अब को ? किन ? बोल्दछ।

अबुझ भै खतरा किन ? मोल्दछ॥

(४)

जति गरौँ सहजै सकिँदैन जो।

नगरुँ ता सहनै सकिँदैन जो ॥

रगतबीज अरे उठिरन्छ जो।

सकल पार्न धुजा जुटिरन्छ जो ॥

(५)

अतलमा छ कतै यसको चुरो।

गरिरहेछ हुँदो नहुँदो कुरो ॥

न त छ औषधि चट्ट निको हुने।

न त छ तन्त्र र मन्त्र सिधै छुने ॥

(६)

बढिरहेछ सधैँ दुगुना बनी।

घुमिरहेछ सबैतिर फन्फनी ॥

जड कहाँ, यसको छ कता तिर।

सकल छन् अनजान यता तिर ॥

(७)

छ अनुहार छुचो अनि दुष्ट छ।

सकलका सँगमा अति रुष्ट छ ॥

मनपरी यसले अति गर्दछ।

छ कसको भरमा ? भर पर्दछ ॥

(८)

जमिन भित्र लुकेर कराउँछ।

अति डराउँछ सुत्त हराउँछ ॥

गरिब साधु सुधा पछि लाउँछ।

सकलको मति नष्ट गराउँछ ॥

(९)



# ३४. म बनौँ विरक्त

जन्मेँ बढेँ विकट पर्वत खोँच भित्र।
मेरा थिए सुजन सुन्दर सौम्य मित्र॥
सौन्दर्यको मधुर दिव्य सुधा पिएर।
उड्थ्यो प्रफुल्ल मन यो पुतली भएर॥
(१)

हावाहुरी सब सही शिशुकाल पार।
अज्ञानमा सब भयो नगरी विचार॥
ऐले तिनै स्मृतिहरू मनभित्र गाढा।
राखेर बस्तछु भईकन आज टाढा॥
(२)

जो जो थिए नजिक ती पनि दूर लागे।
आशामुखी सकल ती पनि दूर भागे॥
सम्पूर्ण हुन् क्षणिक को छ र साथ जाने।
केही रहन्न सँगमा पछि साथ लाने॥
(३)

गर्छौं सधैँ हडबडी अति लोभ गर्छौं।
छौ स्वार्थमा सतत लिप्त हुरुक्क मर्छौं॥
बढ्दो छ लालच सधैँ जति नै कमाऊँ।
आहारिसे छ मन भन्छ सबै म खाऊँ॥
(४)

नाता कुटुम्ब सब साथ भएर टाढा।
सम्बन्ध नित्य उससाथ गरेर गाढा॥
लागूँ सधैँ म उसकै पछि गीत गाई।
होऊँ समर्पित उसैसँग नै रमाई॥
(५)

जो जोस जाँगर थियो अहिले हरायो।
तृष्णा सशक्त छ अझै तन थर्थरायो॥
यो जन्ममा नियतिले जति जे गरायो।
भोगेँ गरेँ मनपरी मन यो डरायो॥
(६)

यौटै छ वस्तु सँगमा पछि साथ लाने।
सद्धर्म जान्छ सँगमा कि त पाप जाने॥
पाएर मानिस जुनी नबुझेर मर्म।
अज्ञानमा हुन गयो अति गर्ह्य कर्म॥
(७)

बाँचौँ सबैसँग सके जति सत्य बोली।
जाऔं म आखिर कसैसँग नै नबोली॥
जे जे गरेँ सब भुली म बनौँ विरक्त।
सत्कार्यमा तर सधैँ म बनूँ सशक्त॥
(८)



# ३५. धरती

हे धर्तिमाता ! जति दूर भागौँ।
आकाश ताकी जति दूर लागौँ॥
जाऊँ जहाँ अन्तिम फर्किआई।
म बस्छु तिम्रै पदमा रमाई॥
(१)

लागेँ म टाढा अति दूर लागेँ।
यद्वा म आफैँसँग दूर भागेँ॥
म लाउँदै नित्य छु आत्मपासो।
पोखूँ म कस्कासँग यो गुनासो॥
(२)

गर्दै बहाना म थरीथरीका।
चाहन्छु के के जगतै भरीका॥
बिर्सेर सत्कार्यहरू समस्त।
घुमेर चारैतिर हुन्छु मस्त॥
(३)

समुद्रका छालहरू नियाली।
गुफाहरूमा पनि दीप बाली॥
खोजेँ गई सुन्दर देश सम्म।
सौन्दर्यको कोष जहाँ छ टम्म॥
(४)

खोजेँ जहाँ खोज्नु रहेछ व्यर्थ।

खोजेँ गई खालि मिल्यो अनर्थ॥

टाढा गएँ खूब बनेँ अनाथ।

फर्केर आएँ म बनेँ सनाथ॥

(५)

हे धर्तिमाता ! जति दूर भागेँ।

आकाश ताकी जति दूर लागेँ॥

आफैँ हराएँ अति नै डराएँ।

हे धर्तिमाता ! अब फर्कि आएँ॥

(६)

*२०५५ साल चैत्र*



# ३६. काखमै फेरि आएँ

अग्ला सेता शिखरतलका गाउँमा जन्मिएँ म ।
ठाडो खोलासरि हरघडी हुरिँदै हुर्किएँ म ॥
झर्नाजस्तै झरझर झरी दूर पाखा गएँ म ।
बिर्सी आफ्नी वरद जननी धेर टाढा भएँ म ॥
(१)

बढ्दै टाढा जति पनि गएँ मै भएँ झन् प्रमादी ।
बिर्सें मैले क्रमसँग सबै स्नेहवात्सल्य आदि ॥
मैले गर्ने जति पनि थिए ती सबै बिर्सिआएँ ।
के हो के हो अबुझ म भएँ स्वार्थमा नै हराएँ ॥
(२)

आमा ! तिम्रो रहर मनको सिर्जना हूँ म एक ।
यस्तो स्वार्थी किन हुन गएँ लाग्छ सारै उदेक ॥
हाँसें रोएँ लुटुपुटु भएँ काखमा नै हराएँ ।
ताती गर्दै टुकुटुकु हिँडें हात तिम्रै समाएँ ॥
(३)

आमा ! तिम्रै वरिपरि घुमें नित्य गाई चराई ।
मैले काटें प्रथम वय जो हाँसिखेली रमाई ॥
जान्थें टाढा जति पनि म ता सम्झना साथ हुन्थ्यौ ।
आमा मेरा रगत कणमा मित्रभित्रै बहन्थ्यौ ॥
(४)

बिस्तारै नै जब अघि बढेँ भीडमा नै हराएँ।
आमा सम्झेँ जति पर गएँ खूब रोएँ कराएँ ॥
हिँड्दाहिँड्दै वय पनि गयो भित्र आफैँ डराएँ।
फर्कें आमा ! भ्रमण सकियो काखमै फेरि आएँ ॥

(५)



# ३७. फर्केर हेर्दा

सेता अग्ला शिखरभरि नै लाल सिन्दूर हाली।
वर्षा गर्छन् रवि पनि जहाँ सिर्जनाज्योति खाली॥
हाँसे जस्तो मुसुमुसु जहाँ खुल्छ नौलो बिहानी।
मेरो प्यारो हिमशिखर हो प्रेरणाको निशानी॥

पाई ऐले पद र सुविधा भैसकेँ दूरदूर।
बोकी सोही प्रथम दिनको सम्झना जो छ दूर॥
जाहाँ जाऊँ तर पनि उही सम्झना हुन्छ बाँकी।
मैले तिर्ने प्रथम ऋण जो तिर्न नै त्यो छ बाँकी॥

लाग्यो वर्षा जलथल भयो पानी वर्षेर धारा।
आँखामा त्यै घर जमिनका देखिने दृश्य सारा॥
मेरो बारी सब भिजिगयो बीज कल्ले उमार्ला।
माटोको त्यो मगमग हुने बास कल्ले सँभार्ला॥

त्यै माटोको अति छ ममता तिर्सना भित्र बाँकी।
देख्ने कल्ले तर हरदमै स्वान्तमा चित्र बाँकी॥
मैले आफ्नू सब भनुँ भने भन्न नै के छ बाँकी।
जे जे सम्झेँ अब त सब ती सम्झनामात्र बाँकी॥



# ३८. खोजी

यही याम थियो पैले ऋतुराज यही थियो ।
नातिशीतोष्णको बेला यही नै महिना थियो ॥
नवीन फूल ताकेर भमरागण आउँथे ।
पुष्पको रस चाखेर भई मस्त रमाउँथे ॥
(१)

जता हेऱ्यो उतै राम्रो फुलेकी प्रकृति थिइन् ।
हालेर फूलको घुम्टो खुलेकी धरती थिइन् ॥
हिलो मैलो हराएर धरती स्निग्ध सुग्घर ।
दुलही झैँ नयाँ लाग्थिन् दिव्य सौन्दर्यकी घर ॥
(२)

हिमाल स्वच्छ देखिन्थ्यो चम्कन्थ्यो नित्य चम्चम ।
सारा प्रकृति नाचेझैँ लाग्दथ्यो गरी छम्छम ॥
दशैँ तिहारका चाड उत्साहसाथ आउँथे ।
मिलेर सब नेपाली उत्साहले मनाउँथे ॥
(३)

सुखदुःख सबै साझा एउटै सब ठान्दथे ।
साझा संस्कृति संस्कार सबैले साथ मान्दथे ॥
फूलको झुलमा झुल्दै मेरो मन रमाउँथ्यो ।
आफैँमा मस्त भै सारा आफैँसँग हराउँथ्यो ॥
(४)

सोही शरदको याम आज शुष्क म देख्तछु।
छैन मादकता कत्ति सारा नीरस देख्तछु॥
हिमालमा छ सन्नाटा मौन शून्य निरीहता।
शुभ्रता स्वच्छता छैन रक्तिमा छ जतातता॥
(५)
देखिन्छ जून निर्ज्योति ज्योत्स्ना दूर भएसरि।
विना बादलको वज्र बज्रिइन्छ घरीघरी॥
दृष्टिमा शून्यता छायो सृष्टिमा देख्छु रिक्तता।
किन हो मनमा मेरो भरिएको छ तिक्तता॥
(६)
सपनामा सधैँ भाग्छु बिपनामा हराउँछु।
बोकी ऐठन छातीमा म सधैँ बर्बराउँछु॥
धमनी भित्रमा मेरो हाहाकार सुसाउँछ।
ठूलो सन्त्रास बोकेर मेरो रात उदाउँछ॥
(७)
अथाह भय आक्रान्त सधैँ थर्थर काम्दछु।
आफैँसँग डराएर म आफ्नै मुटु छाम्दछु॥
माधुर्य भावको ठाउँ बीभत्सपनले लियो।
सन्देह त्रास दुर्भाव शरीरभरि फैलियो ॥
(८)
आफैँसँग कुरा गर्छु आफैँसँग हराउँछु।
अब ता आफ्नू नै छाया देख्ता पनि डराउँछु॥
फूलमा सुषमा छैन सारा अस्तित्व गैसक्यो।
मनमा फक्रने फूल यद्वा त्यो लास भैसक्यो॥
(९)

जिजीविषा छ निर्जीव बाँच्नु के सार बन्दछ।
बाँचेर पनि त्यो बाँच्नु साँच्चै बेकार बन्दछ॥
सिसीफस भएँ यद्वा आफ्नै अस्तित्व खोज्दछु।
म साँच्चै किन हो आज अँध्यारोमात्र रोज्दछु॥

(१०)



# ३९. वृद्धावस्था

आयो यौवन मेरो वा आएन कि त्यसै गयो।
मेरो यौवन साँच्चै नै सपना सरहै भयो ॥
(१)
वृद्धावस्था उसैलाई बन्छ यो अति सुन्दर।
जस्को यौवनको काल बढ्यो सन्मार्गका तिर॥
(२)
वरदान सँगै शाप यो दुवै हुनसक्तछ।
यल्लाई कसले कस्तो कुन मार्ग लगाउँछ॥
(३)
वरदान छ जानेमा नजाने अभिशाप हो।
वृद्धावस्था दुवैतर्फ जाने यो राजमार्ग हो॥
(४)
जानेदेखिन् यही बन्छ मुक्तिको द्वार सुन्दर।
नजानेमा यही बन्छ कुम्भिपाक भयङ्कर॥
(५)
जानेमा मुक्तिको बाटो नजाने कुम्भिपाक हो।
वृद्धावस्था त हाम्रो यो कर्मको नै विपाक हो॥
(६)



# ४०. अभिव्यञ्जना

मेरा यी हरिया डाँडा पाखा यी पहराहरू।
सधैँ एकान्तमा झर्ने छाँगा यी छहराहरू ॥
(१)

मेरा यी सब प्राप्ति हुन् जहाँ पूर्णत्व बोध छ।
जस्को प्रथम झल्कोले मेरा यी नेत्र खोल्दछ॥
(२)

बर्सिद्यूँ लाग्छ पानी भै वर्षाको यही याममा।
माटाको गन्ध ब्युँझाई मेरो एकान्त धाममा॥
(३)

यसै एकान्तमा लाग्छ म सधैँ गुन्गुनाइद्यूँ।
मेरो एकान्त यो बाँचोस् बरु आफू हराइद्यूँ॥
(४)

कैल्यै नसिद्धिने यौटा मुटुको गीत गाइद्यूँ।
कैल्यै नरित्तिने यौटा दिलको प्रीत लाइद्यूँ॥
(५)

सारा बैँस सँगालेर वसन्त म सजाइद्यूँ।
नेपाली फूलबारीमा फूल झैँ मुस्कुराइद्यूँ॥
(६)

यहाँ वैभव नै हुन्छ सानु वास भए पनि।
यहाँ अमृत नै हुन्छ एकै गाँस भए पनि॥
(७)

एकै पल्ट तिमी मान्छे यहाँ आएर हेरिद्यौ।
एकै पल्ट यहाँ आई तिमीले सास फेरिद्यौ॥
(८)

न सम्झीद्यौ तिमी कैल्यै यहाँ अपरिपूर्ण छ।
मेरो एकान्तको देश आफैँमा परिपूर्ण छ॥
(९)

ढुङ्गामा देवता बोल्छन् माटामा स्नेह बोल्दछ।
यहाँ छाती भरी मेरो मेरै नेपाल बोल्दछ॥
(१०)



# ४१. अतीतको सम्झना

आएँ आज म पाकमा र पहिलो यात्रा थियो वास्तव ।
मेरो उत्सुकता थियो हृदयमा पूरा भयो त्यो अब ॥
यौटा होटल भित्र बास बसियो गोष्ठी त्यसैमा थियो ।
गोष्ठी आदि सकेर घुम्न गइयो संक्षिप्त यात्रा थियो ॥
(१)

घुम्यौँ यान चढेर नै सहर जो सारै मिलेको थियो ।
राम्रो सुन्दर योजनाक्रम मिली सारा बनेको थियो ॥
देख्ता भौतिकरूपमा झिलिमिली सर्वांश राम्रो थियो ।
आफ्नो नै सब लाग्दथ्यो तर कहीँ केही कमीझैँ थियो ॥
(२)

देखिन्छन् सब चेहरा सहजमा जाने चिनेकै सरि ।
आँखामा अझ स्नेह देख्तछु उही आवाज उस्तै सरि ॥
माटामा अझ गन्ध बस्तछ उही पानी उही बग्दछ ।
सारा देख्छु उही तथापि किन हो ! क्यै भिन्न झैँ लाग्दछ ।
(३)

आफ्नै धड्कन सुन्छु यो जमिनमा गोडा जहाँ टेक्तछु ।
आफ्ना नै अनुहारका सकल यी मान्छेहरू देख्तछु ॥
जो भेटे पनि बोलुँबोलुँ सरिझैँ लाग्ने मलाई अब ।
आफ्नै लाग्छ समग्र पाकभरिको आकाश धर्ती सब ॥
(४)

हामी छौँ जति यत्रतत्र अहिले साझा उही मूल हो ।
हिन्दूका प्रति राख्तछौ रिस भने तिम्रो महा भूल हो ॥
बण्डा भो जब भूमि यो त्रशित भै भागेर जो जो गए ।
बाँकी छन् जति हिन्दु ती पनि यहाँ रोएर बस्ने भए ॥
(५)
ठान्छौ भिन्न तथापि छाम मुटुमा तिम्रो उही अंश हो ।
आयौ बाहिरबाट को ? भन तिमी साझा उही वंश हो ॥
हाम्रो अंश लिएर वंश किन हो ? ईर्ष्या तिमी गर्दछौ ।
आफ्नै धर्म र जातिमा मन दिई मार्छौ तिमी मर्दछौ ॥
(६)
हामी जे जुन गर्दछौँ तर तिमी उल्टो सबै गर्दछौ ।
हामी पूर्व गए त पश्चिम तिमी ताकेर नै हिँड्दछौ ॥
हामी शान्ति निमित्त अग्रसर छौँ हत्या तिमी गर्दछौ ।
अन्धा छौ अति धर्ममा अबुझ छौ जस्तो सुकै गर्दछौ ॥
(७)
तिम्रा मस्जिद भव्य छन् सब नयाँ भग्नांश छन् मन्दिर ।
बोल्छन् मस्त भएर मस्जिदहरू छन् मौन यी मन्दिर ॥
हिन्दू छन् सब छिन्न भिन्न बहुतै राख्छौ दबाईकन ।
यो कस्तो कुन धर्मको चलन हो आफू तिमी नै भन ॥
(८)
पाँचोटा नदीको पवित्र थल यो हाम्रो बिरानो भयो ।
हिन्दूको अब सिन्धु दूर हुन गो बाँकी यहाँ के रह्यो ?
हाम्रा मूर्ति फुटेर नै सब गए बाँकी रहे क्यै शिला ।
हाम्रो तक्षशिला समाप्त हुन गो सोही भयो टक्शिला ॥
(९)

फेर्‍यौ नाम र चिह्न हिन्दुहरूका आफ्ना बनायौ सब ।
आफ्नो नै इतिहास मात्र किन हो ! राख्ने भएछौ अब ॥
ऐले मुस्लिम छौ र हिन्दु पहिले आफैँ थियौ रे तिमी ।
हिन्दूकै सब रक्त बग्छ मुटुमा के फेर्न सक्छौ तिमी ?
(१०)
तिम्रो नै खुश हो कराउ जति नै अल्ला खुदा जे भन ।
खाली धर्म भनेर नै निठुर भै गर्छौ उपद्रो किन ?
आफैँझैँ अरू देख सृष्टिभरमा श्रीईशको सिर्जन ।
आफू बाँच र बाँच्न देउ अरूको गर्छौ नराम्रो किन ?
(११)
साझा हुन् जति धर्म छन् भुवनमा शास्त्रादि यै भन्दछन् ।
यौटै लक्ष्य छ धर्मको सकलको कल्याण यी गर्दछन् ॥
बुझ्दैनौ किन ? मर्म धर्म सबको सीमा तिमी लाउँछौ ।
राख्छौ क्षुद्र विचार भित्र मनमा अल्ला कहाँ पाउँछौ ?
(१२)
घन्कन्थे अघि वेदमन्त्र द्विजका सारा यिनै गाउँमा ।
सन्न्यासाश्रम बन्दथे वनभरी यद्वा यिनै ठाउँमा ॥
योगी तापस अग्निहोत्र सब ती बस्थे जगाई धुनी ।
लाई ब्रह्मसमाधि निश्चल भई बस्थे गुफामा मुनि ॥
(१३)
हाम्रो दर्शन जन्मियो अनि बढ्यो यै मृत्तिकामा यहीँ ।
सोऽहम्को रट लाउँथे ऋषिमुनि ब्रह्मास्मि भन्थे यहीँ ॥
यै बाटो अघि आर्यको उदय भो सद्धर्म यस्मै भए ।
ऐले देख्तिन ँ चिह्न सम्म पनि ती सारा हराए गए ॥
(१४)

देखेथे शुभ वेदमन्त्र पहिले द्रष्टाहरूले यहीँ ।
लेखे भारत सत्पुराण ऋषि या स्रष्टाहरूले यहीँ ॥
पढ्थे संस्कृत वाङ्मयादि गुरुका चेलाहरूले यहीँ ।
हाम्रो संस्कृतिका धरोहरहरू देखिन्न ऐले कहीँ ॥

(१५)

हेर्दा पूर्व दिशा यहाँ अरुणिमा झुल्के सरी लाग्दछ ।
माटामा अझ बीज पूर्व युगको होला सरी लाग्दछ ॥
वर्षेला जब ब्रह्मनीर यसमा होला सबै सुस्थिर ।
यै ठानीकन फर्किंदैछु अहिले नेपाल आफ्नै घर ॥

*इस्लामावाद, पाकिस्तान, सन् १९७७, अप्रिल ७ र ८*



# ४२. उठ हे देशका पार्थ

नवीन वर्ष प्रारम्भ दुई शून्य बहत्तर ।
वैशाख बाह्र मध्याह्न हुँदा बार शनैश्चर ॥
(१)

आयो बिभत्स भूकम्प हल्लायो धरती घर ।
मृत्युको क्षण सम्झेर लाग्यो डर भयङ्कर ॥
(२)

उनन्तीस गते फेरि पराक् भूकम्प कम्पन ।
आएर खूब हल्लायो गऱ्यो ताण्डव नर्तन ॥
(३)

यसको कष्ट बोकेर राष्ट्र चित्कार गर्दछ ।
दुःखी मनुष्यको भित्री पीडा बाहिर छर्दछ ॥
(४)

कैयौँ आवास पाताल भए यद्वा चिरा परे ।
अग्ला घर र आवास पल्टिए भूमिमा झरे ॥
(५)

मरे पसलमा कोही हिँड्दा हिँड्दै कुनै मरे ।
माथिबाटै कुदे कोही अङ्गभङ्ग भए मरे ॥
(६)

अपाङ्ग भै कुनै बाँचे विधुवा टुहुरा भए ।
एक नै क्षणमा ध्वंस भयो सारा कता गए ॥

(७)

हाम्रो संरचना भत्क्यो हाम्रो आधार भत्कियो ।
काष्ठमण्डप जो भत्क्यो हाम्रो विश्वास भत्कियो ॥

(८)

हाम्रा संस्कृति संस्कार धर्मस्तम्भहरू ढले ।
मठमन्दिर पूजाका देवस्थलहरू ढले ॥

(९)

भयो धरहरा ध्वस्त भाँचियो सकियो गयो ।
नेपाली जनको उच्च शिर भैँ जो खडा थियो ॥

(१०)

ऐतिहासिक दर्बार पुरातात्त्विक सम्पदा ।
भत्किए भाँचिए ध्वंस भएर छरिए कि ता ॥

(११)

राजधानी भयो ध्वस्त जिल्लाहरू भए चिरा ।
गाउँ बस्ती भए ध्वस्त हिमाली भेग भो चिरा ॥

(१२)

हिमाल हल्लियो चौंरी भेडाका गोठ ती ढले ।
गुराँस र बुकी फुल्ने नागी चिरा भई गले ॥

(१३)

हिउँको पहिरो भित्र कैयौं मान्छेहरू परे ।
अग्ला शिखरमा चढ्ने आरोही मृत भै झरे ॥
(१४)

प्रचण्ड कम्पले गर्दा अग्ला पहाड नै झरे ।
फैलाई त्रास सर्वत्र अवरुद्ध नदी गरे ॥
(१५)

हजारौँ नर नारी र शिशु वृद्धहरू मरे ।
पहाड र तराईका हिमाली जनता मरे ॥
(१६)

थिचिएर घरैभित्र चेपिएर कुनै मरे ।
माग्दै गुहार उद्धार गर भन्दै कुनै मरे ॥
(१७)

पैलो कम्पनमा पर्ने थाहा सुद्धि नभै मरे ।
पराक् कम्पनमा केही भाग्दा भाग्दै कठै मरे ॥
(१८)

वसन्तऋतुमा ऐले लासको गन्ध लीकन ।
वासन्ती वायु चल्दो छ पारी उद्विग्न यो मन ॥
(१९)

पृथ्वीको हल्लिने काम चलेको छ अहर्निश ।
कहिलेसम्म चल्ने हो भन्न सक्तैन मानिस ॥
(२०)

भूकम्प र पराक् कम्प बारम्बार चलीकन ।
उडायो सबको सातो पाऱ्यो विक्षिप्त झैँ मन ॥
(२१)
अभिशाप भयो बाँच्नु त्रास बोकी सधैँभरि ।
भन्छन् मानिस उद्विग्न भई कामेर थर्थरी ॥
(२२)
युवा, समाजका सेवी, सेना र प्रहरी जन ।
होमिए गर्न उद्धार अहोरात्र दिई मन ॥
(२३)
गए सर्कारका मन्त्री सभासदहरू गए ।
कर्मचारी र सञ्चारकर्मी दौडी सबै गए ॥
(२४)
चिकित्सक गए साथै इञ्जिनीयर ती गए ।
नेपाली दौडिँदै आए विदेशतिर जो थिए ॥
(२५)
मित्र राष्ट्रहरू आए गर्न उद्धार तत्क्षण ।
वायुयान र सामान ल्याए बाँडे दनादन ॥
(२६)
साथै विदेशका सेना आए उद्धार जो गरे ।
गर्दै उद्धार आकाशै बीचबाट कुनै झरे ॥
(२७)

धेरै उदार देखिए थियो विशालभैँ मन ।
सहायता गरे ठूलो खर्चिए बहुतै धन ॥

(२८)

छद्मवेषीहरू आए छद्म उद्धार नाममा ॥
मौका छोपेर नै लागे  धर्मान्तरण काममा ।

(२९)

आफ्नू नै धर्मको रक्षा गरे मनुष्य बाँच्तछ ।
विना धर्म र संस्कार समाज शव बन्दछ ।

(३०)

उठ हे ! जुर्मुराएर युवाको दलको दल ।
धर्म संस्कृति जोगाऊ त्यागी दलीय दल्दल ॥

(३१)

राष्ट्रनिर्माणको मौका सम्भी आलस्य सम्भ्रम ।
त्यागी तरुण हो ! जाग बगाऊ पसिना श्रम ॥

(३२)

तिम्रै पौरखले बन्छ हाम्रो नेपाल नूतन ।
उठ हे देशका पार्थ ! यो नेपाल बनाउन ॥

(३३)



# ४३. आज पो होस पाएँ

लागेँ टाढा पर पर म ता कामना भित्र पाली,
राखी भित्री दमित मनमा अस्मिता मात्र खाली ।
कैले ताकेँ अतिशय उचा व्योमका तर्फ जान,
मैले खोजेँ जड मति भई सम्पदा शक्ति मान ॥

(१)

कैले दौडेँ विकसित ठुला राष्ट्रमा फुर्ति साथ,
फन्को मारेँ वितत धरती उच्च पारेर माथ ।
टाढा टाढा जति जति गएँ स्वत्व आफ्नो हराएँ,
घ'म्दाघ'म्दै समय सकियो तुच्छमा नै रमाएँ ॥

(२)

भित्रै आफ्नै पुगिन कहिल्यै बाहिरै मात्र धाएँ,
बेकारैमा सब वय गयो आज पो होस पाएँ ।
वृद्धावस्था जब हुन गयो मृत्यु सम्झेँ डराएँ,
खोजेँ आफ्नै हृदय तलमा ब्रह्म पाएँ रमाएँ ॥

(३)



# ४४. सहस्र चन्द्रदर्शन

नेपाली काव्यधाराका तिमी हौ कविनायक।
प्रेरणास्रोत हौ हाम्रो काव्यऊर्जाप्रदायक॥
प्रेरणा र प्रयोक्ता हौ नवछन्दविधानका।
जीवन्तज्योति हौ हाम्रा नेपाली स्वाभिमानका॥
(१)

अजस्र स्रोत हौ हाम्रा तिमी हौ काव्यका धुरी।
प्रवाहित सधैँ गर्छौ शब्दसौन्दर्य माधुरी॥
गौरी इन्द्रकुमारी र राजराजेश्वरी दियौ।
तिमीले राष्ट्रनिर्माता अश्वत्थामा नयाँ दियौ॥
(२)

मालतीमङ्गले साथै विषकन्या यहाँ दियौ।
तिमीले राष्ट्रका निम्ति उपहार निकै दियौ॥
कालीका नवधाराका उन्नायक तिमी थियौ।
गोरेटोबाट बिस्तारै राजमार्ग गरी दियौ॥
(३)

सयौँ वर्ष अझै बाँच साहित्योद्यान यो भर।
अभिभावक भै हाम्रो बाटो देखाउने गर॥
तिमी भविष्यद्रष्टा हौ तिमी हौ राष्ट्रका धन।
कवि हौ राष्ट्रका साझा तिमी हौ राष्ट्रधड्कन॥
(४)



# ४५. ब्रह्ममा वृत्ति लागोस्

जन्म्यौ बाबा ! जुन समयमा भाग्यका साथ आयौ ।
शिक्षादीक्षा क्रमसँग लिई सिर्जनामा रमायौ ॥
शिक्षाबाटै जब शुरु भयो योगको दिव्य काम ।
थुप्रै शिष्या अनुगत भए योगिनी भो सुनाम ॥
(१)

हिँड्ने इच्छा जुन अघि थियो शुद्ध संस्कार साथ ।
त्यै बाटो नै क्रमसँग लियौ उच्च पारेर माथ ॥
ज्यूँदो आस्था सितिमिति उसै बन्छ कैले अनाथ ।
ऐले तिम्रा सकल रचना छन् खडा गर्वसाथ ॥
(२)

बाबा ! तिम्रो हृदय यसले स्वच्छ पारी बढायो ।
बिस्तारै नै अभयपदको उच्च चोटी चढायो ॥
बन्दै साक्षी मम र अहमाकारका वृत्ति छोडी ।
सोझै बाबा ! अघि बढ तिमी ब्रह्ममा वृत्ति जोडी ॥
(३)

छोडी सारा लटपटहरू ब्रह्ममात्रै अँगाली ।
बढ्दै जाऊ विकट पथमा धैर्यलाई सँगाली ॥
द्रष्टा मात्रै बन अब तिमी दृश्य सारा हटाई ।
आफैँ नै हौ अब चिन तिमी ब्रह्म भै ब्रह्मलाई ॥
(४)

तिम्रो आत्मा अविचल भई स्वान्तको शुद्धि मागोस् ।
तिम्रो भित्री हृदयपटमा ब्रह्मको ज्योति जागोस् ॥
तिम्रा बाधा झटपट हटुन् स्वस्थ हौ रोग भागोस् ।
बाबा ! बाँचे युगयुग तिमी ब्रह्ममा चित्त लागोस् ॥

(५)



# ४६. आरोग्यकामना

टाढा हेर्दै प्रथम वयमा शैलका खोँचबाट ।
नाघ्दै आयौ विकट पहरा भीर मैदानफाँट ।।
देख्यौ टाढा क्षितिज सहसा जोशले जुर्मुरायौ ।
छर्दै आभा तरुण रविझैँ पूर्वबाटै उदायौ ।
(१)

सङ्लो झर्ना भरर जसरी झर्छ शैलेन्द्रबाट ।
त्यस्तै आयौ सरर तिमी गोगने गाउँबाट ।।
राम्रो बाटो जुन अघि लियौ त्यो भयो पूर्णकाम ।
सोहीबाटै सफल हुन गै फैलियो शुभ्र नाम ।।
(२)

के भो यस्तो कवि ! किन भयौ मौनझैँ आज खास ।
तिम्रा साथी कविगण सबै देख्छु सारै उदास ।।
तिम्रो बोली कुन नियतिले सुट्ट चोरेर भाग्यो ।
काव्यश्रीमा ग्रहण कसरी आज आएर लाग्यो ।।
(३)

हामी दिन्छौँ भर उठ तिमी हात हाम्रा समाऊ ।
सारा चिन्ता पर गर तिमी स्वस्थ भै झट्ट आऊ ।।
तिम्रा राम्रा सरस कविता लौन आऊ सुनाऊ ।
आऊ प्यारा तरुण कवि हे ! फूलझैँ मुस्कुराऊ ।।
(४)

मन्दाक्रान्तासँग उठ तिमी लेखनी त्यो समाती।
पैले जस्तै हिँड अब तिमी उच्च पारेर छाती॥
खोली आफ्नू सुमधुर गला एउटा गीत गाऊ।
सोझै आऊ धरमर नभै सुस्त टेकेर पाउ॥
(५)
कोठे गोष्ठी अघि जति भए साथसाथै रमायौँ।
सुन्दै तिम्रा मधुर कविता मस्त भै मुस्कुरायौँ॥
बस्छौँ पर्खी अझ पनि सबै स्वस्थ भै झट्ट आऊ।
भित्रैदेखिन् झनन हुने राष्ट्रको गीत गाऊ॥
(६)
हाँस्तै आऊ सरस कविता साथमा बैँस बोकी।
आऊ उस्तै तरुणसरि भै कालको चाल रोकी॥
मुक्का तानी अघि बढ तिमी रोग दुर्दैन्य नासी।
बोल्द्यौ यौटा मधुर कविता मन्दमुस्कान हाँसी॥
(७)
तस्मात् चाँडै अब उठ तिमी साथ छौँ साथ दिन्छौँ।
हामी सक्छौँ यदि पनि भने दुःख बाँडेर लिन्छौँ॥
कोठे गोष्ठी अझ पनि सधैँ मार्ग हेरेर बस्छ।
आऊ आऊ कविवर ! तिमी चाहना आज यै छ॥
(८)
फ्याँकी सारा भ्रम कुहक यी ब्रह्ममा वृत्ति जोडी
उठ्द्यौ चाँडै म अनि ममको तुच्छ जञ्जाल तोडी॥
कल्ले रोक्ने सरल मनको ज्वार जाज्वल्य वंश।
कल्ले छेक्ने दहर तहको शुद्ध चैतन्य अंश॥
(९)

यो धर्तीमा नर जुनि लिई जन्मने भाग्य पायौँ।
भाग्यैद्वारा सुकृतपथको पान्थ भै आज आयौँ॥
हिँड्दा हिँड्दै समयतिर वा ध्यान हाम्रो गएन।
यद्वा तिम्रो त्यस विषयमा ज्ञान राम्रो भएन॥
(१०)

छन् धेरै नै सम विषमका मार्ग नाना अनेक।
यौटै मात्रै अभय पथ हो ब्रह्मको ज्ञान एक॥
तस्मात् चाँडै सुझबुझ लिई ज्ञानका तर्फ लाग।
सुस्ती छोडी अब कवि तिमी जुर्मुराएर जाग॥
(११)



# ४७. कविजी उठ

यावत्स्वस्थमिदं शरीरमरुजं यावज्जरा दूरतः ।
यावच्चेन्द्रियशक्तिरप्रतिहता यावत्क्षयो नायुषः ॥
आत्मश्रेयसि तावदेव विदुषा कार्यः प्रयत्नो महान् ।
सन्दीप्ते भवने तु कूपखननं प्रत्युद्यमः कीदृशः ॥
– *भर्तृहरिः*

जैलेसम्म रहन्छ शक्ति तनमा उत्साह राखी अति ।
सक्तैमा गरिहाल्नु पर्दछ सबै सत्कार्य गर्ने जति ॥
बिस्तारै सकिएर शक्ति तनमा उत्साह जाला जब ।
डेगै चल्न सकिन्न हुन्छ पछुतो बेकार होला सब ॥
(१)

कछुवाले सरी आफ्ना खुम्च्याइ वृत्ति ती सब ।
स्थितप्रज्ञसरी यद्वा बस्छौ कि ? ध्यानमा अब ॥
(२)

श्वासप्रश्वासमा यद्वा सोऽहंको रट लाउँछौँ ।
ध्यानस्थ छौ कि ? हे मित्र ! आफैँ भित्र हराउँछौ ॥
(३)

आत्मकामी सरी यद्वा आत्मामा नै रमाउँदै ।
बसेका छौ कि ? हे मित्र ! आत्माकै गीत गाउँदै ॥
(४)

यो हो प्रारब्धको खेल तिम्रो कर्म विपाक यो ।
*'अवश्यमेव भोक्तव्यम्'* ठानेर भोग्नु पर्छ यो ॥
(५)

*'अस्थूलमनणु'* तिम्रो निरामय शरीर यो।

अहिले कसरी यस्तो रोगग्रस्त हुँदो भयो॥

(६)

दृश्य दर्शन द्रष्टादि त्रिपुटीबाट भै पर।

बस्ने झलझलाकार तिमी आत्मा परात्पर॥

(७)

अरू बेसार हुन् सारा ब्रह्म नै एक सार हो।

*'ब्रह्मैव सन् ब्रह्माप्येति'* श्रुतिको मुख्य सार हो।

(८)

आधिव्याधि सबैलाई फ्याँकेर स्वस्थ भैकन।

उठ हे मित्र ! तत्कालै दरो पारेर नै मन॥

(९)

# ४८. चिरायुकामना

निम्बार्क पथका पान्थ तिमी सन्तशिरोमणि ।
भक्तिमा अति निष्णात विद्वान् सर्जक अग्रणी ॥
(१)

जिब्रामा भारती नाच्छिन् भाषा सुन्दर संस्कृत ।
कविता वनिता तिम्री सोह्रै शृङ्गारले युत ॥
(२)

भक्तिको दीप बालेर तिमी घुम्छौ अहर्निश ।
अज्ञान शर्वरीलाई पारेर सर्वदा वश ॥
(३)

गर्छौ संसारको यात्रा सधैँ छौ भक्तिमै रत ।
भक्ति बोल्छौ जहाँ जान्छौ तिमी भक्ति विशारद ॥
(४)

बोल्दछौ जब हे सन्त ! *'यो ब्रह्माणं'* भनीकन ।
प्रसुप्त चेतना उठ्छन् सारा जागा बनीकन ॥
(५)

ऋषिका रूपमा सन्त देखिन्छौ जब बाहिर ।
निरावरण भैदिन्छन् तिम्रा चर्या सबैतिर ॥
(६)

भक्तिका पान्थ निर्भ्रान्त तोडी जञ्जाल सम्भ्रम ।
शतायु बन हे सन्त ! टाढा राख अहं मम ॥
(७)



# ४९. शतायुकामना

अविज्ञात भनी ख्यात तिमी हौ कुलका मणि।
सबैका दुःखका साथी परोपकार अग्रणी॥
(१)
दीर्घ जीवन पाएर भयो सार्थक जीवन।
बाँचेर मात्र के हुन्छ ? पढ जीवनदर्शन॥
(२)
आयौ संसारमा घुम्दै चौरासी लाख योनिमा।
घुम्यौ दुश्चक्रमा मित्र ! रम्छौ कति ? विथाहमा॥
(३)
हेरी संसारको चाल गरेर सूक्ष्म चिन्तन।
गरिहाल छिटै पूर्ण बन्ला सार्थक जीवन॥
(४)
पाई मनुष्यको योनि भएन ब्रह्मचिन्तन।
भने निरर्थकै हुन्छ तिम्रो अमूल्य जीवन॥
(५)
अन्तःकरणका वृत्ति गरेर परिमार्जन।
शेष जीवन यो लागोस् गर्न सद्ब्रह्मचिन्तन॥
(६)

गुरुका मुखले सुन्दै महावाक्य निरन्तर ।
गरे चिन्तन आफैँ नै बन्दछौँ ब्रह्म आखिर ॥
(७)

दृश्य संसार मिथ्या हो द्रष्टा हो ब्रह्म शाश्वत ।
ब्रह्मज्ञान भए हुन्छ मुक्त मानिस वस्तुतः ॥
(८)



# ५०. साझा श्रद्धाञ्जलि

दुर्दान्त रौद्र घटना दरबारभित्र।
राती घटेछ सहसा बहुतै विचित्र॥
यस्तो विचित्र घटना कसरी भएछ।
पत्याउनै नसकिने घटना भएछ॥
(१)

राती भयो विदित यो सब फोनबाट।
छक्कै परेँ म सहसा यस दुःखबाट॥
निद्रा गयो भय भयो सुखशान्ति भाग्यो।
पत्याउनै सकिन स्वप्न समान लाग्यो॥
(२)

निस्तब्ध भो सकल राष्ट्र भयो विषण्ण।
देखिन्छ जो पनि यहाँ अति नै छ खिन्न॥
के भो ? भयो किन ? कहाँ ? कसरी ? भनेर।
सोध्छन् सबैसँग सबै विरही बनेर॥
(३)

हल्ला विभिन्न अझ छन् बुझिँदैन खास।
देखिन्छ चारतिर सम्भ्रम एक नास॥
नेपालको मुटु उडी सहसा गएछ।
सोच्नै कतै नसकिने घटना भएछ॥
(४)

नेपालका नृपसँगै परिवार आज।
टाढा भए सकल शून्य गरी समाज॥
दुर्भाग्य हो अब हुँदैन यहाँ भलाइ।
सन्तप्त पार्छ अति नै यसले मलाई॥
(५)
यो हिन्दुराष्ट्र समभाव र शान्तिसाथ।
चाहन्छ बढ्न अघि खूब बनी सनाथ॥
जो शान्तिसाथ अघि बढ्दछ एकनास।
दुर्भाग्यले छ उसकै किन हो ? विनाश॥
(६)
यो शान्तिको पथ छ दुस्तर कष्टसाध्य।
यो हो महाव्रत दुरूह सधैँ असाध्य॥
यै शान्तिनिम्ति नृपबाट भयो प्रयास।
त्यै वीरको हुन गयो अहिले विनाश॥
(७)
रानी गइन् सुत गए परिवार सारा।
नेपाल यो हुन गयो अब बेसहारा॥
फ्याँकेर दृश्य अघिका सब एक एक।
दृश्यावली बदलिए क्षणमै अनेक॥
(८)
राम्रा गुणी नृप गए क्षणमा हराए।
आतेस भो र जनता बहुतै डराए॥
देखिन्छ खिन्न जनता बहुतै उदास।
बाँच्नै छ मुस्किल हरे ! अब छैन आस॥
(९)

*१९ ज्येष्ठ २०५८*

# ५१. सम्झना

झुल्कियौ झल्ल बत्ती भै औँसीका मध्यरातमा ।
जसरी शीतको थोपा चम्किइन्छ प्रभातमा ।।
(१)
साहित्याकाशमा सूर्यजस्तै भएर फैलियौ ।
फक्र्यौ कुड्मल भै पुष्प हामीलाई खुशी दियौ ।।
(२)
महाकाव्य फुले काव्यवाटिका मग्मगाउँदै ।
कुञ्जिनी कुञ्जमा आइन् जूनझैँ जग्मगाउँदै ।।
(३)
मुनामदनका जोडी देखिए सहसा गए ।
शकुन्तला भइन् मौन पतिले जब बिर्सिए ।।
(४)
सुलोचना छिटै आइन् तिमीले जे थियो दियौ ।
'म तिम्रो कात्तिके हैन' भन्दै हे कवि ! गर्जियौ ।
(५)
निबन्ध, कविता धेरै उपन्यास पनि दियौ ।
जे जे थियो दियौ सारा आफैँ हे कवि ! रित्तियौ ।।
(६)
सकिएर सबै आफू भऱ्यौ साहित्यवाटिका ।
तिमी हौ चम्किने ज्योति अरू पिलपिले फिका ।।
(७)

पचासमा गयौ लक्ष्मी पचास अहिले गए।
हामीलाई अझै दिन्थ्यौ बाँचेका कविजी भए॥
(८)

गयौ शून्य भयौँ हामी बाँकी छ खालि सम्झना।
शताब्दी वर्षमा गर्छु भावसाथ म वन्दना॥
(९)



# ५२. सन्तको अन्त

वसिष्ठ कुलउत्पन्न सन्त कृष्ण भनीकन ।
चिन्छन् मानिसले आज राजनेता विचक्षण ॥
(१)

गीताज्ञाता सुधी वक्ता प्रत्युत्पन्न कुलाग्रणी ।
कुलदीपक निष्णात गोर्खोत्पन्न महामणि ॥
(२)

मुमुक्षु अनि जिज्ञासु ब्रह्मचारी द्विजोत्तम ।
विद्वान् लेखक सद्ज्ञानी वाराणसेय उत्तम ॥
(३)

राष्ट्रका निम्तिमा जल्ले छोड्यो स्वार्थ र सञ्चय ।
सबैलाई दियो जल्ले अगाडि बढ्न निर्भय ॥
(४)

सम्पत्ति उनका छाता सुराही अनि पुस्तक ।
थिए किञ्चित् अरू केही थिएन वस्तु भौतिक ॥
(५)

ठट्यौलो बाहिरी रूप भित्र गम्भीरता थियो ।
व्यङ्ग्य गर्न थिए दक्ष काममा मन्दता थियो ॥
(६)

दल सर्कार दोटैका बने यी मुख्य नायक ।
किन्तु जीवन गार्हस्थ्य थियो सारै अनायक ॥
(७)

अविवाहित भै बस्थे हेर्दा बाहिर ती स्वतः ।
भित्री रूप थियो कस्तो बुझिन्न अन्त वस्तुतः ॥
(८)

गोर्खाबाट उनी आए राजनेता बने उनी ।
गए कृष्ण कता फेरि देखिँदैनन् यता उनी ॥
(९)

सम्झना मात्र बाँकी छ मात्र बाँकी छ सम्झना ॥
श्रद्धाञ्जलि म अर्पन्छु कृष्णमा अभिवन्दना ॥
(१०)



# ५३. श्रद्धाञ्जलि

अति चञ्चल तुच्छ यो सबै भ्रम पालेर तथापि ली भ्रम।
नबुझीकन कालचक्र यो घुमिरेछौँ भवमा ससम्भ्रम ॥
(१)

कति मित्र गए कता कता कति छौँ जान सदैव तत्पर।
तर तै पनि छैन सुद्धि खै घुमिरेछौँ भ्रममा निरन्तर ॥
(२)

सब हौँ क्षणका यहाँ सखा कसको को छ यहाँ सधैँ हुने।
सुखमा सब साथ छौँ यहाँ छ र को दुःख हुँदा सँगै रुने ॥
(३)

भवचक्र समान घुम्छ यो कसको हुन्छ यहाँ सधैँ जय।
तर तै पनि घुम्दछौँ सधैँ भवमा भ्रान्ति लिएर निर्भय ॥
(४)

अघि जन्म दिने कता गए कति छन् जन्म दिने अझै खडा।
अझ घुम्नु छ चक्रमा हरे भवको ताप सहेर यो कडा ॥
(५)

जबसम्म रहन्छ सञ्चिति क्रम छुट्टैन यहाँ कसै गरी।
यसले भवमा घुमाउँदै भ्रमीमा पेल्दछ यो सधैँभरि ॥
(६)

अघि को.क. हुँदा सँगै थियौँ अहिले सुत्त गयौ कता तिमी।
अब लाग्छ सबै विडम्बना क्षणको यो सब हो रिमीझिमी ॥
(७)

तनभाव गयो गयौ तिमी क्षणमै ब्रह्म भयौ सनातन।
अहिले अति भक्तिभावले मनको गर्दछु पुष्प अर्पण ॥
(८)



# ५४. श्रद्धासुमन

जानेका नाममा श्रद्धा कसरी गरुँ अर्पण।
यस्तै सम्झेर नै मैले गरेँ चिन्तन तक्षण ॥
पुराना कोष्ठगोष्ठीका केही टेप झिकीकन।
खोलेँ र देखिइन् जाने अगाडि फेरि तत्क्षण ॥

(१)

घन्कियो उनको वाणी छन्दमा कविता जब।
अन्तःकरणमा मेरो परावाणी फुऱ्यो तब ॥
मन्दाक्रान्ता लिई छन्द अत्यन्त शान्त भैकन।
उनका नाममा जन्म्यो श्रद्धासुमन तत्क्षण ॥

(२)

जाने सारै अविचल थियौ काव्यको साधनामा।
सानैदेखिन् दृढतर थियौ काव्य आराधनामा ॥
तिम्रो वाणी मधुर रसको छोड्दथ्यो भावधारा।
लाग्यौ छोडी अब कुन दिशा पाइ कस्को सहारा ?

(३)

हाम्रा उस्तै दिन र रजनी बित्त छन् आजसम्म।
भेला हुन्छौँ कविगण सबै कोकमा आइ टम्म ॥
हाम्रा चल्छन् जमघटहरू को.क. चल्दैछ आज।
जाने छैनौ अति पर भयौ शून्य पारी समाज ॥

(४)

यस्तै गोष्ठी अमरपुरमा चल्छ होला अवश्य।
हुन्छन् होला भरत दुइटै साथमा ती अवश्य॥
साथै होलान् पुरुष घट वा जो पहिल्यै हराए।
भेला पारी कविगण सबै काव्य गोष्ठी गराए॥
(५)
यस्तै नै हो क्षणिक दुनियाँ कोपिला फुल्छ झर्छ।
आयो जो जो क्रमसँग सबै आखिरी जानुपर्छ॥
यस्तै सम्झी मन दृढ गरी साधनातर्फ लागौँ।
बेलामा नै सुझबुझ लिई ज्ञानका तर्फ जागौँ॥
(६)



# ५५. केवल सम्झना

भुल्कियौ अघि बिस्तारै पूर्वबाट क्रमैसँग ।
अन्धकार गरी ध्वस्त भयौ व्याप्त सबैसँग ॥
(१)

आफैँ उठ्यौ तिमी माथि अरूलाई उठाउँदै ।
विकासको फुक्यौ शङ्ख डाडाँकाँडा जगाउँदै ॥
(२)

छरियौ तिमी सर्वत्र प्रकाशपुञ्जझैँ बनी ।
तिमी हौ प्रेरणादीप तिमी हिम्मतका धनी ॥
(३)

चट्टान पहरा फोरी झर्ने हौ झरना तिमी ।
तिमी हौ सबका साथी सहारा सबका तिमी ॥
(४)

तिमी कर्मठ कर्मी हौ निःस्वार्थ काम गर्दथ्यौ ।
पसिना रक्तका बिन्दु देशकै लागि छर्दथ्यौ ॥
(५)

गरीब जनका साथी अछूत जनका जन ।
बाँच्यौ परार्थका लागि गयौ ब्रह्म भईकन ॥
(६)

मुठ्ठी बाँधी यहाँ आयौ मुठ्ठी खोलेर नै गयौ ।
साँच्चै असल हौ मान्छे तिमी असल नै भयौ ॥
(७)

भयौ कालजयी वीर लड्यौ कालसँगै पनि ।
भुकेनौ कहिल्यै वीर जस्तै आइपरे पनि ॥
(८)
ठाडो शिर गरी बाँच्यौ दियौ मन परार्थमा ।
तिमी हिमाल हौ वीर कामनाको यथार्थमा ॥
(९)
*नैनं छिन्दन्ति शस्त्राणि नैनं दहति पावकः ।*
*न चैनं क्लेदयन्त्यापो न शोषयति मारुतः ॥*
(१०)
साँच्चै नै तिमी हौ ब्रह्म कसले छुन सक्तछ ।
हावा र पानीले वीर कसरी धुन सक्तछ ?
(११)
थोत्रा लुगासरी त्याग्यौ थोत्रो शरीर जो थियो ।
प्रारब्धले तिमीलाई भोगका निम्ति जो दियो ॥
(१२)
अहिले त्यो गर्‍यौ त्याग अजरामर छौ तिमी ।
कर्मको जाल फ्याँकेर ब्रह्मलीन भयौ तिमी ॥
(१३)
देख्ता थियौ तिमी शुद्ध बाहिरी दृष्टिले तर ।
भित्र के के थियो तिम्रो कसले देख्नसक्छ र ?
(१४)
तिमी निर्भय भै बढ्थ्यौ जस्तै बाधा भए पनि ।
तिमी प्रतीक हौ यौटा अहं र ममका धनी ॥
(१५)

देखाइकन अस्तित्व चौरासीमा तिमी गयौ।
भए पनि तिमी पैले नभए सरि नै भयौ ॥
(१६)

गयौ शून्य भयो सारा वैलियो सबको मन।
बसेका छौँ सबै हामी अति स्तब्ध भईकन ॥
(१७)

दुखेको मनको रुन्चे भाव भित्रै थिचीकन।
गर्छु अत्यन्त श्रद्धाले श्रद्धाञ्जलि समर्पण ॥
(१८)



# ५६. श्रद्धापुष्प

पूर्वबाट तिमी झुल्क्यौ चम्कियो पूर्वको नभ ।
फैलायौ ज्ञानको रश्मि साहित्य श्रुतिसौरभ ।।
खोँच पाखाहरू नाघ्दै तामाकोशी भई बग्यौ ।
सुनकोशी र रोसीका छालमा हेलिँदै बग्यौ ।।
(१)

नथाक्ने कहिल्यै यौटा थियौ उद्भट मानिस ।
छताछुल्ल बग्यौ पोख्तै आफैँलाई अहर्निश ।।
छात्रछात्राहरूलाई बाँड्दै ज्ञान स्वयं बनी ।
बग्यौ पहाड फेदीमा कमला तटमा पनि ।।
(२)

शुरुमै तिमीले पस्क्यौ महाकाव्य सुसंस्कृत ।
महेन्द्रोदयको साथ बढ्यौ बन्दै समुन्नत ।।
जताततै भयौ व्याप्त जाज्वल्य प्रतिभा थियौ ।
गरी प्रवेश सेवामा धेरै वर्षहरू दियौ ।।
(३)

सेवाका साथका साथै साहित्यसृजनातिर ।
थियौ तल्लीन सर्वांश दियौ काव्य निरन्तर ।।
को. क. गोष्ठी हुँदा स्रष्टा सधैँ नै साथमा हुने ।
मन्थलीय जहाँ हुन्थ्यौ हामी त्यतै रमाउने ।।
(४)

दुरन्त काल हो आयो तिमीलाई लाग्यो गयौ ।
कविजी अब ता साँच्चै हामीबाट बिदा भयौ ॥
श्रद्धानत भई ऐले सम्झिएर प्रतिक्षण ।
गर्दैछु म तिमीलाई श्रद्धापुष्प समर्पण ॥
(५)

गयौ भरत ! साँच्चै नै टाढा टाढा कता गयौ ।
दृश्यबाट हटी ऐले स्वयं द्रष्टा तिमी भयौ ॥
तिमीले कविजी पायौ त्यहाँ जो रसको रस ।
आनन्द ब्रह्मका साथ एकाकार भई बस ॥
(६)



# लेखकका प्रकाशित ग्रन्थहरू

## आध्यात्मिक

१. ज्ञान र भक्ति – २०६३
२. रासपञ्चाध्यायी – २०६४
३. ब्रह्मसाक्षात्कार – २०६५
४. उपनिषत्सार – २०६७
५. ब्रह्मसूत्रसार – २०६७
६. मणिरत्नमाला अनुवाद – २०६७
७. अध्यास र चतुःसूत्री – २०६८
८. वेदान्तपरिभाषासार – २०६८
९. श्रीकृष्णाय वयन्नुमः – २०६९
१०. परमसत्य – २०६९
११. अध्यास – २०६९
१२. अद्वैतसिद्धिः १ खण्ड – २०६९
१३. अद्वैतसिद्धिः २ खण्ड – २०७०
१४. अन्तिम उपदेश – २०७०
१५. ब्रह्मविद्या – २०७०
१६. अजातवाद – २०७१
१७. पराविद्या – २०७१
१८. औपनिषद पुरुष – २०७२
१९. अपरोक्षाऽनुभूति – २०७२

## लौकिक

१. उसैको लागिको समीक्षा – २०२६
२. ऋतुमन्थन, समीक्षा – २०४४
३. सिर्जनाका फूलहरू, कविता – २०५१
४. बहादुर शाह, खण्डकाव्य – २०५२
५. श्रद्धाञ्जलि, शोककाव्य – २०५२
६. गीत तथा भजनहरू – २०५२
७. अमरसिंहको चिट्ठी, काव्य – २०५३
८. क्रान्तिदूत, खण्डकाव्य – २०५३
९. विविधयात्रा, कविता – २०५५
१०. यात्रैयात्रा, कविता – २०५८
११. पत्रैपत्र, कविता – २०५९
१२. पृथ्वीविजय, काव्य – २०६२
१३. तीर्थहरूको यात्रावृत्तान्त – २०६४
१४. अनुस्मृति (जीवनयात्रा) – २०६७
१५. वन्दना – २०६८
१६. कविशतक – २०६८
१७. अष्ट्रेलियाको दैनिकी – २०६९
१८. आभास – २०७२


9 789937 299541